रबिन श्रेष्ठ, यँ

# नेपालभाषा व्याकरण

लेखक
डा. सुन्दरकृष्ण जोशी

प्रकाशक
नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान
कमलादी, काठमाडौं

# उपकुलपतिको मन्तव्य

नेपाल अधिराज्य भनेको विभिन्न वर्ण, जातिजातिसमूहको साझा फूलबारी भएर रहेको छ। यहाँ विभिन्न रङ्गका मनोहारी फूलहरू ढकमक्क भएर फुलेझैं गरी काव्य, साहित्य, संस्कृति, कलाका बगैंचामा पनि विभिन्न भावधारा, विभिन्न वैचारिक, दार्शनिक चिन्तनधारा बोकेका काव्य-साहित्यले कलाका, सुन्दर फूलहरू फुलाएका छन्। यिनै विभिन्न भावधारा र चिन्तनधारा लिएर काव्यसाहित्यसाधनामा लागेका कवि साहित्यकारहरूले आफ्ना-आफ्ना ठाउँबाट आफ्नै शैली, आफ्नै अभिव्यक्तिको सुवास फैलाएर अनेकतामा पनि एकताको रङ्ग घोलेर नेपाली काव्य-साहित्य-कलाका रसिक पाठकलाई यथेष्ट परितृप्ति दिने प्रयास गरिरहेका छन्।

नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानको मूल उद्देश्य यस्तै विभिन्न रङ्ग र रूपका सांस्कृतिक एकता र बास्ना लिएर फुलेका राष्ट्रभाषा नेपाली र अरू राष्ट्रिय भाषाका काव्य-कलाकुसुमलाई चुनेर यसको रस र बास्ना देशभित्र र बाहिर फैलाउँदै देशको साहित्य, कला, संस्कृतिको भण्डारलाई समृद्ध तुल्याउनु हो। साथै यसैमार्फत साहित्यका प्रबुद्ध र रसिक पाठकहरूलाई परितृप्ति पनि तुल्याउनुरहेको छ।

वर्तमान प्रजातान्त्रिक अभ्यासका परिप्रेक्ष्यमा राष्ट्रका विविध कला, संस्कृति र साहित्यलाई राष्ट्रको अक्षुण्णता राखी अखण्ड, सुदृढ, शान्त र सुन्दर नेपालका रूपमा यहाँका विविध सामाजिक परम्परा र संस्कृति मात्र होइन चिन्तनधारालाई पनि निष्पक्षरूपमा एक सूत्रमा गाँस्ने प्रयत्न गर्नु पनि यसको कर्तव्यक्षेत्रभित्र पर्न आउँछ। यिनै उद्देश्यहरूको परिपूर्ति गर्ने क्रममा प्रतिष्ठानले आजपर्यन्त नेपाली वाङ्मयलाई आफ्नो क्षमताले भेटेसम्म प्रकाशित गर्दै आएको छ र अब पनि अक्षुण्ण बढावा दिँदै जानेछ।

मोहन कोइराला
उपकुलपति
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# प्रकाशकीय

हिमालयको सुन्दर, शान्त र शीतल काखमा रहेको नेपाल हिमाली सभ्यता र संस्कृतिको केन्द्र हो र बहुजातीय एवं बहुभाषिक राष्ट्र हो । यसमा निवास गर्ने जातजातिका आ-आफ्नै भाषा, आ-आफ्नै कलाकौशल, आ-आफ्नै गीत-सङ्गीत, आ-आफ्नै नृत्य नाट्य, आ-आफ्नै संस्कृति तथा आ-आफ्नै धार्मिक-दार्शनिक अवधारणा छन् तापनि ती राष्ट्रिय एकताका अटूट सूत्रमा गाँसिएका छन् र आ-आफ्ना परम्परा जोगाउँदै, सहिष्णुता र सहअस्तित्वको सिद्धान्तमा बाँचेका छन् । यसैले नेपाल विश्वसमक्ष बहुलवादी समाजको अनुपम आदर्श प्रस्तुत गर्न सक्षम रहिआएको छ ।

अनेकतामा एकताको यसै आदर्शअनुरूप नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानले नेपाललाई यसको आफ्नो समग्रतामा परिचित गराउने हेतुले नेपालको राष्ट्रभाषा नेपालीका साथै नेपालका राष्ट्रिय भाषा तथा कलाकौशल, गीत-सङ्गीत, नृत्य, नाट्य, संस्कृति र समाजशास्त्रसम्बन्धी विषयको अध्ययन अनुसन्धान एवं मौलिक सृजन तथा अनुवादका माध्यमबाट उपयोगी कृति तयार गरी-गराई प्रकाशमा ल्याउने अनि यसरी विभिन्न क्षेत्रमा कार्यरत चिन्तक, अनुसन्धायक, सृजनशील प्रतिभाहरूलाई सक्तो प्रेरणा र प्रोत्साहन दिँदै विभिन्न विषय भाषा र साहित्यका विकास तथा समृद्धिमा सक्तो योगदान दिने उद्देश्य राखेर काम गर्दै आएको छ र यो सबैमा विदितै छ ।

यसै बहुमुखी उद्देश्यअन्तर्गत प्रसिद्ध भाषाविद् प्राध्यापक डा. सुन्दरकृष्ण जोशीद्वारा लिखित 'नेपाल भाषा व्याकरण' प्रकाशित हुन लागेको छ । नेपालका राष्ट्रिय भाषाहरूमा साहित्य, कोश तथा व्याकरण जस्ता विविध विधाद्वारा समृद्ध भाषाहरूको एउटा प्रमुख भाषा हो– नेपाल भाषा अर्थात् नेवार

भाषा । हालसम्म नेपाल भाषाको व्याकरणसम्बन्धी पुस्तकहरू थुप्रै प्रकाशित भैसकेका छन् । तर तीमध्ये अधिकांश पुस्तकहरू नेपाल भाषाको माध्यमबाट लेखिएका छन् भने केही अङ्ग्रेजी भाषाको माध्यमबाट । डा. जोशीद्वारा लेखिएको प्रस्तुत ग्रन्थ नेपाली राष्ट्रभाषाको माध्यमबाट लेखिएको हुनाले नेवार भाषाबाहेक इतर-भाषाभाषीहरूको साथै विविध कारणवश आफ्नो मातृभाषा बोल्न, लेख्न र बुझ्न छोडेका कतिपय नेवारहरूको निम्ति पनि यो व्याकरण अत्यन्त उपयोगी हुनेछ भनी आशा गर्न सकिन्छ । यो ग्रन्थ प्रकाशित गर्न पाएकोमा हामी अत्यन्त हर्षित छौं । साथै यसका विद्वान् लेखक प्राध्यापक डा. सुन्दरकृष्ण जोशीलाई धन्यवाद दिनु पनि हामी आफ्नो कर्तव्य ठान्दछौं ।

**नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान**

# उपोद्घात

नेपालका नागरिकहरूको वाग्व्यवहारमा धेरै भाषाहरू छन्, तसर्थ नेपाल बहुभाषिक मुलुक हो। नेपालका भाषाहरूको सङ्ख्याबारे भाषाशास्त्रीहरूमा मतैक्य पाइदैन। २०४८ को जनगणनाबाट प्राप्त तथ्याङ्क हेर्दा मूलतः यहाँ २६ वटा भाषा देखिन्छन्। नेपालको राष्ट्रभाषा नेपाली हो, यो समस्त नेपालीहरूको साझा भाषा हो, यो व्याकरण, कोश र साहित्यद्वारा समृद्ध छ। नेपालका राष्ट्रिय भाषाहरूमध्ये व्याकरण, कोश, साहित्य आदि वाङ्मयले परिपूर्ण, समृद्ध भाषा नेवारी र मैथिली हुन्। यी दुवैमा पत्रपत्रिका प्रकाशित हुन्छन्, त्रि वि मा स्नातकोत्तर तहसम्म पढाइ हुन्छ। यी दुवैमा फरक के छ भने मैथिली मागधी शाखाको भारत वर्गको भाषा हो, जसका वक्ता भारततर्फ साढे दुइ करोडभन्दा बढी छन् र नेपालमा, २०४८ को जनगणनाबाट प्राप्त तथ्याङ्कअनुसार बाईस लाख मैथिलीभाषी नेपालीहरू छन्, नेवारी भाषा भने नेपाली भूभागमा उदित प्राचीनतम भाषा हो। मल्लकालमा काठमाडौं उपत्यकामा संस्कृत-मैथिली-नेवारी, यी तीनोटै भाषा तंछाड-मछाड गर्दै जोड जुलुमकासाथ हुर्किरहेका थिए, उन्नतिशील अवस्थामा थिए। लिच्छविकालमा संस्कृत राजभाषा भएकोले नेवारी भाषाभाषीहरूले संस्कृतका पद-वाक्य सुन्ने-बोल्ने काम भई नै रह्यो। मल्लकालमा संस्कृतका ग्रन्थहरूका पाण्डुलिपि पूर्ण शुद्धतासाथ नेवारी-भाषाभाषीहरूले नेवारी लिपिमा सार्ने, लेख्ने काम गर्दथे। त्यस बेला, जगज्ज्योतिर्मल्लको राज्यकालमा, मैथिल कवि वंशमणि झाले लेखेको संस्कृत काव्य 'हरिकेलि महाकाव्यम्' ब्राह्मण परिवारका व्यक्तिले देवनागरी लिपिमा सारेको अशुद्ध पाइन्छ भने नेवारी लिपिमा सारेको शुद्ध रूप पाइन्छ।

नेवारी भाषालाई त्यस भाषाका वक्ताहरू नेवा भाय, वा नेपालभाषा भन्ने गर्दछन्। डा सुन्दरकृष्ण जोशीज्यूले प्रस्तुत कृतिलाई 'नेपालभाषा व्याकरण' नै भन्नुभएको छ। २०४८ को जनगणनाबाट प्राप्त तथ्याङ्कअनुसार यस भाषाका वक्ताहरूको सङ्ख्या लगभग सात लाख छ। नेपालबाहिर खास गरेर भारतको दार्जिलिङमा पनि यस भाषाका वक्ता पर्याप्त मात्रामा

पाइन्छन् । नेवारी भाषाबारे भाषाशास्त्री बालकृष्ण पोखरेल (राष्ट्रभाषा, २०५५) भन्नुहुन्छ– यो भाषा काठमाडौंको रैथाने भाषा हो । काठमाडौंको व्यवहारमा रहेको स्वरूपबाहेक यसका प्रमुख भाषिकाहरू हुन्– भादगाउँली, दोलखाली, चित्लाङ्गी र बनेपाली । यीमध्ये दोलखाली भाषा साहित्यिक नेवारीबाट पृथक् छ । डा. सुन्दरकृष्ण जोशीले 'बनेपाली' छोड्नुभएको छ, र पोखरेलले नेवारीको निकटसम्बन्धी मानेको पहारी भाषालाई नेपालभाषाको भाषिका मानी भाषिकाको सङ्ख्या पाँच बनाउनुभएको छ, अनि उपभाषिकाहरूबारे चर्चा गर्नुभएको छ । यसै प्रसङ्गमा यो व्याकरण लेख्नाको उद्देश्यबारे जोशीज्यूको भनाइ छ– नेपालभाषाका विभिन्न भाषिका र उपभाषिका बोल्ने नेवारहरूमध्ये धेरैले नेपाली बुझ्ने हुनाले पनि नेपाली-माध्यममा नेपालभाषा व्याकरण आवश्यक सम्झिएअनुरूप यो व्याकरण लेखिएको हो ।

वास्तवमा प्रकृत व्याकरण-ग्रन्थको लेखनमा प्रवृत्ति-प्रवर्तनाको मूलभूत लक्ष्य वा अन्तश्चेतना त्यही नै थियो– सबद्ध भाषाका भाषिका-उपभाषिकाका वक्ताहरू साझा भाषाको माध्यमबाट एउटै व्याकरणिक सूतिमा उभियून्, नेवारी भाषाको स्तरीय रूप एउटै कायम होओस् । यसको साथै नेवारी भाषाबाहेक इतर राष्ट्रिय भाषा वा राष्ट्रभाषा नेपालीका भाषाविद् तथा व्याकरणका लेखक-साधकहरूका निमित्त पनि नेपाली माध्यमबाट तयार गरिएको यो नेपालभाषा व्याकरण उपयोगी र रुच्य हुनेछ । हालसम्म लेखिएका नेवारी भाषासबद्ध व्याकरणिक कृतिहरूभन्दा बेग्लै रूपमा, अभिनव कलेवरमा, यो व्याकरण प्रस्तुत गर्नुहुने डा. जोशीज्यू सर्वथा साधुवादार्ह हुनुहुन्छ । आशा छ यसबाट अध्येतृवर्ग यथेष्ट लाभान्वित हुनेछ ।

**डा. टीकाराम पन्थी**
*सदस्य*
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# प्रस्तुत पुस्तकको प्रसंग

नेपालभाषाका विविध नामहरू छन् । **नेपालभाषा** यस भाषाको अभिलेखहरूद्वारा प्रमाणित प्राचीन नाउँ हो । वर्तमानमा नेवारहरूले यस भाषालाई आफ्नै भाषामा **नेवाः भाय्** भन्छन् भने भारोपेली परिवारका भाषाभाषीहरू र पाश्चात्य देशका मानिसहरूले पनि भारोपेली प्रवृत्तिकै अनुसरण गरी **नेवारी** भन्ने गरेका छन् । नेपालभाषा भोट-चिनिया परिवारको भाषा हो । सो परिवारका भाषाहरूमा कतैकतै संज्ञा र विशेषणको एउटै रूप हुने हुनाले कसैकसैले यसलाई **नेवारभाषा** पनि भन्ने गरेका छन् तापनि भाषा समाजमा नेपालभाषा नै लोकप्रिय हुनाले यहाँ पनि नेपालभाषा नै लेख्ने गरिएको छ । नेपालका नेवारहरूले आफ्नो मातृभाषाका रूपमा बोलिने यो नेपालको एक राष्ट्रियभाषा हो । यस भाषाका आफ्नै लिपिहरू र लामो साहित्यिक परम्परा छन् ।

## लिपि

नेपालभाषाका विविध लिपिहरूमध्ये **प्रचलित नेपाललिपि, रञ्जनालिपि** र **भुजिंमोलिपि** प्रसिद्ध छन् तापनि प्राचीन गन्थ्र र अभिलेखहरूमा सबभन्दा बढी प्रयोग प्रचलित नेपाललिपिकै थियो । नेपालभाषाका प्राचीन वाङ्मय रचनाहरू मात्र होइन, संस्कृतभाषाका ग्रन्थहरू समेत नेपाललिपिमा लेखिएका थिए तापनि छापाखानाको प्रबन्ध नेपालमा पनि भएदेखिन् छापाखानामा नेपाललिपिको व्यवस्था नभएकोले प्रचार-प्रसारको दृष्टिले नेपालभाषा साहित्यको माध्यमिक कालमा तत्कालीन कवि लेखकहरूले नेपाललिपि छोडी देवनागरीलिपिमा लेख्ने गरेका थिए । सो परम्परा आजसम्म पनि कायमै छ तापनि नेपालभाषाको प्राचीन भाषा र साहित्य, संस्कृति र पुरातात्त्विक विषयहरूमा अध्ययन-अनुसन्धान गर्ने स्वदेशी र विदेशी विद्वानहरूलाई पनि नेपाललिपिको ज्ञान नभइनहुने हुनाले हाल **नेपाल लिपि गुठी** र अरू संघ-संस्थाहरू यसको प्रचार-प्रसारमा लागेका छन् । नेपालको उच्च शिक्षामा पनि यसको प्राध्यापनको व्यवस्था छ ।

**वाङ्मय रचना**

लिच्छवीकालीन (वि.सं.२४२-९३६) संस्कृत भाषाका अभिलेखहरूमा नेपालभाषाका थुप्रै शब्दहरू पाइए पनि एघारौं शताब्दीदेखि यस भाषामै लेखिएका अभिलेखहरू भेटिएका छन् । यी अभिलेखहरूमध्ये वि. सं. १४३१ को **हरमेखला** भन्ने चिकित्साशास्त्र, वि. सं. १४३७ को **न्यायशास्त्र**, वि. सं. १४३७ को **अमरकोश**को टीकाग्रन्थ र वि. सं. १४४६ को **गोपालराज वंशावली** अत्यन्त महत्त्वपूर्ण मानिन्छन् ।

**साहित्य**

१६ रौं शताब्दीदेखि सुरु भएको नेपालभाषाका प्राचीन साहित्यमा प्रशस्त कविता र नाटकहरू लेखिएका छन् । मल्लकालीन राजाहरू स्वयं नाटक रच्थे र अवसर विशेषमा सहभागी भई मञ्चन पनि गर्ने गर्थे । टोल टोलमा बनेका डबलीहरूले मल्लकालीन नाटक र नृत्यहरूको प्राचुर्यलाई प्रमाणित गरिरहेका छन् र प्रशस्त नाटकहरू अप्रकाशित अवस्थामै छन् । प्रशस्त कविताहरू प्रकाशित भइसकेपछि पनि प्रशस्त अरू कविताहरू प्रकाशनकै प्रतीक्षामा छन् । गद्यतर्फ नेपालभाषा साहित्यका माध्यमिक कालका गद्यगुरु निष्ठानन्द वज्राचार्य (वि. सं. १९१५-१९९२) ले जस्तो बोलिन्छ उस्तै लेख्न थालेपछि गद्य लेखनमा परिवर्तनको स्थिति आयो र त्यसैको फलस्वरूप आज पद्यसँगै गद्यतर्फ पनि त्यस अन्तर्गत विभिन्न विधामा विकासको लहर छाएको छ ।

**नेपालभाषाका भाषिकाहरू**

नेपाल खाल्डो नै नेवारहरूको मूल थलो थियो तापनि कारणबस बसाइँ सर्दै उपत्यका बाहिर र देशका विभिन्न ठाउँमा रहेकाहरूको संख्या कुल जनसंख्याको ३५ देखि ४० प्रतिशत रहेको अनुमान छ । त्यसरी बाहिर जानेहरूमा धेरै जसो ठाउँमा भक्तपुरबाट गएका हुनाले बाहिरका धेरै जसो भाषिकाहरूमा भक्तपुरको प्रभाव परेको देखिन्छ । काठमाडौं-पाटनको साहित्यिक भाषिकालाई स्तरीय भाषा मानिएको छ जसको प्रभाव उपत्यका बाहिर नगण्य रूपमा मात्र देखिन्छ । वि. सं. २०४८ सालको जनगणनानुसार देशभरि नेवारहरूको कुल जनसंख्या १०,४१,०९० छ र मातृभाषाका रूपमा नेपालभाषा बोल्नेको संख्या ६,९०,००७ रहेको देखाइएको छ । यो तथ्याङ्कलाई हेर्दा नेवारहरूको कुल संख्याको ६६% ले मात्र नेपालभाषा बुझ्ने, बोल्न सक्ने, बाँकी ३४% ले बुझ्न र बोल्न

छोडिसकेका छन् भन्ने देखाउँछ । यसरी नेपालभाषा मातृभाषाका रूपमा नबोल्नेमा काठमाडौं खाल्डोभन्दा बाहिरका बासिन्दा बढी छन् ।

नेपालभाषाका साहित्य, संस्कृति आदि बारे बुझ्न चाहने नेपालकै विभाषीहरू पनि धेरै छन् । तर भाषा बुझ्न नसकेकै कारणले नेपालभाषाका साहित्य, संस्कृति र भाषिक विशेषताहरूको जे जति प्रचार-प्रसार हुनु पर्दथ्यो त्यो भइरहेको छैन । त्यसैले विभाषी नेपालीहरू र उपत्यका बाहिरका नेवारहरूको लागि समेत उपयोगी हुने खालको व्याकरण नेपालीभाषाको माध्यमबाट भए धेरै उपयोगी हुन्थ्यो भन्ने कुरामा मलाई हौसला बढाउनुहुने प्राज्ञ डा. टीकाराम पन्थी र प्राज्ञ तथा नेपालभाषाका अग्रज समालोचक माधवलाल कर्माचार्यप्रति म कृतज्ञ छु । सरल बनाउँछु भनी लेख्नु अगि सोचे पनि लेख्दैजाँदा अनुसन्धानात्मक प्रकृतिको हुनगई सरल भएन कि भन्ने शंका लागेको छ ।

नेपालभाषाका भाषिकाहरू कति छन्, के के हुन् भन्ने कुरा अध्ययन अनुसन्धानकै विषय रहन गएको छ तापनि हाललाई काम चलाउ रूपमा मानी आए अनुसार यस भाषामा **काठमाडौं-पाटनको** (अलिअलि मात्र फरक भएको कारणले दुवैको नाउँ जोडी एउटै गरिएको), **भक्तपुरको, दोलखाको, चित्लाङ्गको र पही** (पहरी वा नगरकोटहरूको) समेत गरी जम्मा ५ मानिएका र अरू उपभाषिकाहरूमा प्याङ गाउँकोलाई पाटनको उप-भाषिका; लिस्ती, तौथली र दुतिकोलाई दोल्खाको उप-भाषिका; गमाल, बलामीलाई चित्लाङ्गको उप-भाषिका; पाल्पा, गोरखा, बन्दीपुर, बाग्लुङ, सिन्धुपाल्चोक, पर्वत, आदिलाई भक्तपुर भाषिकाको उप-भाषिकामा लिन सकिन्छ । नगरकोटे (पही) हरू जुनसुकै ठाउँमा छरिएर बसेका किन नहोस् उनीहरूको आपसमा आफ्नो भाषिकामा कुरा चल्छ । अरूहरूको आ-आफ्नो उप-भाषिका बोल्नेहरूसित सम्बन्धित भाषिकामा कुरा हुनसक्छ तापनि प्याङ् गाउँकोलाई भने नजिकै बस्ने अरू नेवारहरूले पनि नबुझ्ने हुनाले त्यसलाई पाटनको भाषिकाको उप-भाषिका नभनी छुट्टै भाषिका रूपमा लिनु पर्ने हो - होइन भन्ने कुरा पनि अनुसन्धानकै विषय भइरहेको छ । यसरी भाषाको दृष्टिकोणबाट स्तरीय मानिएको काठमाडौं-पाटनको नेपालभाषाले यी सबैलाई समेट्न नसकिरहेको अवस्थामा पनि नेपालभाषाका यी विविध भाषिका र उप-भाषिका बोल्ने नेवारहरूमध्ये धेरैले नेपाली बुझ्ने हुनाले पनि नेपालीको माध्यममा नेपालभाषाको व्याकरण हुनु आवश्यक सम्झिए अनुरूप यो व्याकरण लेखिएको हो । यो अनुसन्धानात्मक रूपको भाषावैज्ञानिक व्याकरण हुनाले भाषा सिक्नेहरूको लागि सोझो रूपमा त्यसको काम नआउन सक्छ तापनि भाषा सिकाउने शिक्षकहरूको

लागि भने यो अत्यन्त उपयोगीहुने खालको व्याकरण हुनसक्छ भन्ने मेरो विश्वास छ ।

**नेपालभाषा व्याकरण**

विद्वानहरूले नेपालभाषा साहित्यको काल-विभाजन निम्न किसिमले गरेका छन् -

| | |
|---|---|
| (क) प्राचीन | वि. सं. १५६२-१९०४ |
| (ख) माध्यमिक | वि. सं. १९०४-१९९८ |
| (ग) आधुनिक | वि. सं. १९९८- |

उत्तर प्राचीनकालमा वि. सं. १८८८ मा ब्रायन् हजसनको अनुरोधमा पं. अमृतानन्द वन्देले **नेपालभाषा व्याकरण** लेखेका थिए जुन अहिले लण्डनको **इण्डिया अफिस लाइब्रेरी**मा सुरक्षित छ तापनि प्रकाशित रूपमा नआउनाले त्यसबारे यहाँ केही चर्चा भएन ।

माध्यमिक कालमा वि. सं. १९८३ मा कविवर सिद्धिदास अमात्यले **सिद्धि व्याकरण** र धर्मादित्य धर्माचार्यले (वि.सं. १९५९-२०१९) **संक्षिप्त नेपाल व्याकरण** लेखेको चर्चा सुनिन्छ तापनि हालसम्म ती दुवै पुस्तकहरू अप्रकाशित रहेकाले ती व्याकरण पुस्तकहरू कस्ता खालका हुन् भन्ने बारे केही जान्न र भन्न सकिएन । सन् १८७५ (वि. सं. १९३२) मा नेपाल आउनुहुने रूसका सेण्ट पिटर्स (लेलीनग्राड) विश्वविद्यालयका पूर्वीय साहित्य र संस्कृतिका विद्वान् इभान पाब्लोवीच मिनायफले नेपालभाषाका कोश र अरू पुस्तकहरूसँगै पं. गुणानन्द वन्देद्वारा तयार गरिएको नेपालभाषाको व्याकरण पनि रूस लगेका थिए । यी पुस्तकहरूले रूस र युरोपका अरू मुलुकहरूमा नेपालभाषाको प्रचार र अध्ययन-अनुसन्धान कार्यमा बल पुऱ्याएको विश्वास गरिएको छ । चर्चामा आएका तर प्रकाशित नभएका ती व्याकरणहरू के कस्ता खालका हुन् भन्ने बारे अप्रकाशित रहेकै कारणले गर्दा अज्ञात रहेको छ । शुक्रराज 'शास्त्री'ले लेख्नुभएको **नेपालभाषा व्याकरण** भने वि. सं. १९८५ मा लेखक आफैले कलकत्ताबाट प्रकाशित गरेका कारणले प्रकाशित भएको हिसाबले नेपालभाषाको सबभन्दा पहिलो व्याकरण हुन गएको छ ।

शास्त्रीज्यूको नेपालभाषा व्याकरण राम्रो र उपयोगी छ । उक्त व्याकरणले पछिल्ला वैय्याकरणहरूमा केही प्रभाव पारेको देखिन्छ । व्याकरणिक कोटीको नाम संस्कृतमा दिए पनि त्यसको अंग्रेजी रूपान्तर कोष्ठक-चिन्हभित्र राखिदिनाले

एक भाषामा बुझ्न नसकिएको कुरो अर्को भाषाको माध्यमद्वारा बुझ्न सजिलो हुन गएको छ । शास्त्रीज्यूले वार्णिक भन्दा ध्वनितात्त्विक आलेखनको बढी प्रयोग गरेका छन् । अचेल नेपालभाषामा नासिक्य र नासिकीकरणमा ह्रस्व-दीर्घ मात्रको भेद भएको भन्ठानी नासिकीकरण (चन्द्रबिन्दु) को दीर्घरूप नासिक्य (शिरबिन्दु) मानी लेख्ने चलन छ । यो वार्णिक आलेखनको कुरो भयो । ध्वनितात्त्विक दृष्टिले नासिक्य र नासिकीकरणको भेद छ (हेर्नुहोस् १.१.२ अनुनासिकको ह्रस्व-दीर्घ रूप) । शास्त्रीज्यूले यस विषयमा ध्वनितात्त्विक दृष्टिले मिल्ने गरी लेख्नुभएको छ । त्यस्तै आत्मअभूत (उत्तम पुरुषको वर्तमान् तथा भविष्यत्) रूपमा बोल्दा / धाय् / **भन्छु** / नय् / **खान्छु** इ. बोले पनि लेख्दा धाये, नये लेख्ने चलन छ । तर शुक्रराज शास्त्रीले उदारतापूर्वक यी दुवै रूप **धाय् र धाये, नय् र नये** लाई वैकल्पिक मान्यता दिएका छन् । अनेक गुण भए पनि एक दुई कुरामा भने गम्भीर भूल हुनगएको छ । वहाँको व्याकरण छापिएर निस्कनु १९ वर्ष अगि सन् १९०९ (वि.सं. १९६६) मा **डा. स्टेन कोनो**ले ध्वनि, रूप, अर्थका अनेक उदाहरण दिई नेपालभाषा **भोट-चिनिया** परिवारमा परेको बारे प्रमाणित गरिसकेका थिए तापनि *नेपालभाषाको पनि मुख्य आधार र नियम संस्कृत भाषाकै गर्नु पर्छ, सबै भाषाको आमा संस्कृत वाणी नै हो भनी सबै देशका विद्वानहरूले स्वीकार गरेका छन्* (शास्त्री १९८५:ग) भनी लेख्नु भएको छ । नेपालभाषामा संस्कृत भाषाको प्रभाव छ, तर नियम र आधार संस्कृतकै गर्नुपर्छ भन्न सकिन्न । सबै भाषाको आमा संस्कृत हो भन्ने कुरा सबै देशका विद्वान्हरूले स्वीकारेका छन् भन्ने कुरा पनि साँचो होइन ।

त्यस्तै एक अर्को ठाउँमा शास्त्रीज्यूले (१९८५:१६) *नेपालभाषा व्याकरणमा सन्धिको व्यवहार हुन्न* भनी लेख्नुभएको छ, जब कि नेपालभाषामा रूप-सन्धिका प्रशस्तै उदाहरण छन् (हेर्नुहोस् २.२ नेपालभाषामा रूप-सन्धि) । त्यस्तै नेपालभाषामा छँदै नभएको मूर्धन्य व्यञ्जन वर्णहरू **म्हुत्वी**को लागि **म्हुट्वी, पुतु**को लागि **पुटु म्हिते**को लागि **म्हिटे** आदि लेख्ने गर्नुभएको छ । उहाँले नेपालभाषा व्याकरणलाई नेपालभाषाको आफ्नो प्रकृति विपरीत कतै कतै बढी संस्कृतीकरण गर्न खोज्नुभएको छ ।

माध्यमिक कालमै सन् १९४१ (वि.सं. १९९८) मा हायन्स जोर्गेन्सन्ले अंग्रेजी भाषाको माध्यमद्वारा **प्राचीन नेपालभाषाको व्याकरण (A Grammar of the Classical Newari)** लेखेका थिए । सो व्याकरण राम्रो र उपयोगी भए पनि त्यो प्रचलित नेपालभाषाको नभई विभिन्न अभिलेखका भाषालाई आधार मानी लेखिएको पुरानो भाषाको व्याकरण हो ।

हालसम्ममा नेपालभाषामा वि.सं. १९८५ देखि २०५५ सम्ममा निम्नानुसार विभिन्न १० वटा व्याकरण पुस्तकहरू प्रकाशित छन् -

| शीर्षक | लेखक | प्रकाशन वर्ष | पृष्ठ संख्या |
|---|---|---|---|
| १. नेपालभाषा | शुक्रराज 'शास्त्री' | १९८५ | २५६ |
| २. सुबोध नेपालभाषा व्याकरण | पुष्परत्न सागर | २००९ | १३६ |
| ३. नेपालभाषा व्याकरण | लोकमान सिं | २०१२ | १०६ |
| ४. शब्द रचना अलंकार | आदिवज्र वज्राचार्य | २०१५ | ७७ |
| ५. पौभा | हितकरवीरसिंह कंसाकार | २०१५ | ११६ |
| ६. मूलुखा | ईश्वरानन्द श्रेष्ठचार्य | २०२९ | ८८ |
| ७. च्वसा | तुयबहादुर महर्जन | २०४४ | ६४ |
| ८. भीगु व्याकरण | तुयुबहादुर महर्जन | २०४७ | १३९ |
| ९. नेपालभाषाया भाषावैज्ञानिक व्याकरण | सुन्दरकृष्ण जोशी | २०४९ | २४९ |
| १०.नेपालभाषा व्याकरण | तुयुबहादुर महर्जन | २०५५ | २४७ |

यी बाहेक भाषाको छिटो प्रचार-प्रसार होस् भन्ने विचारले, कमसे कम समयमा बढीभन्दा बढी लेख्न र बोल्न सकून भन्ने उद्देश्यले (८ पृष्ठ देखि ४७ सम्मको) नेपालभाषाका व्याकरण सम्बन्धी ११ वटा जति पुस्तिकाहरू लेखिएर प्रकाशित भइसकेका छन्, तिनीहरू यस प्रकारका छन् -

| शीर्षक | लेखक | प्रकाशन वर्ष | पृष्ठ संख्या |
|---|---|---|---|
| १. नेपालभाषा मूलँपु | आदिवज्र वज्राचार्य | २०१५ | २८ |
| २. नेपालभाषा गय् च्वयगु | चित्तधर 'हृदय' | २००९ | १५ |
| ३. नेपालभाषा ख:कथं च्वयगु लँपु | सूर्यबहादुर 'पिवा:' | २०१२ | २७ |
| ४. शुद्ध च्वेगु सूत्र | सत्यमोहन जोशी | २०१५ | २७ |
| ५. नेपालभाषा शब्द रूपावली | पन्नाप्रसाद जोशी | २०१६ | २४ |
| ६. ह्रस्व-दीर्घया म्ये | सूर्यबहादुर 'पिवा:' | २०१६ | ८ |
| ७. संक्षिप्त नेपालभाषा व्याकरण | ज्यानबहादुर नेवा: | २०१८ | ४० |
| ८. चलंचा | ईश्वरानन्द श्रेष्ठचार्य | २०२३ | २६ |
| ९. स्तरीय नेपालभाषा नियमावली | काशीनाथ तमोट | २०३७ | ४७ |
| १०.नेपालभाषा व भाषाविज्ञान | तेजरत्न कंसाकार | २०३९ | ४७ |
| ११.सहलहया सुलचं | राजा शाक्य | २०४७ | २६ |

व्याकरणका यी पुस्तक-पुस्तिकाहरू आ-आफ्नै तालले महत्त्वपूर्ण छन् तापनि समयको गतिसित बदलिंदै गएको भाषाको स्थिति र भाषा-अध्ययन सम्बन्धी नयाँ परिपाटीको विकासले गर्दा पनि धेरै अगि लेखिएका यी पुस्तक-पुस्तिकाहरूमध्ये धेरैजसो अलि पुरानो भइसकेको महसूस हुन्छ, अर्थात् समयको गतिले पछाडि परिसकेको भान हुन्छ । अर्को कुरा यी सबै पुस्तक-पुस्तिकाहरू नेपालभाषामै लेखिएका हुन् । यी बाहेक निम्न ३ वटा व्याकरण सम्बन्धी पुस्तकहरू अंग्रेजी भाषामा प्रकाशित छन् ।

| **शीर्षक** | **लेखक** | **प्रकाशन वर्ष** | **पृष्ठ संख्या** |
|---|---|---|---|
| १. A Grammar of the Classical Newari | Hans Jorgensen | 1942 | 108 |
| २. A Basic Course in Coloquial Newari | Tej R. Kansakar | 1984 | 150 |
| ३. The Newari Language: A Working Outline | Kamal P. Malla | 1985 | 111 |

यी पुस्तक-पुस्तिकाहरू बाहेक नेपालभाषाकै विषयलाई लिएर नेपालभाषा र अंग्रेजी भाषामा प्रशस्त व्याकरणिक तथा भाषावैज्ञानिक लेखहरू स्वदेशी र विदेशी विद्वानहरूबाट लेख्ने काम भएको छ । अंग्रेजी र नेपालभाषा पनि नबुझ्ने विभाषी र मातृभाषाकै रूपमा नेपालभाषा प्रयोग गर्न छाडिसकेका नेवारहरूको लागि पनि उपयोगी हुने खालको व्याकरणिक पुस्तकको अभाव जो धेरै अगिदेखि खट्किरहेको थियो सो पूर्ति गर्ने काम यस पुस्तकबाट हुनेछ । कृति अनुसन्धानात्मक भएको कारणले भने यो अभाव पूर्तिको रूपमा मात्र आएको नभई यसबाट नेपालभाषाको भाषिक अध्ययनमा जो मौलिक देन पनि भएको छ त्यो स्मरणीय रहनेछ । मेरो यस कार्यमा हौसला बढाउनुहुने राजकीय प्रज्ञा प्रतिष्ठानका **प्राज्ञद्वय डा. श्री टीकाराम पन्थी र श्री माधवलाल कर्माचार्य**प्रति म फेरि पनि हार्दिक कृतज्ञता ज्ञापन गर्दछु । उहाँहरूबाट मलाई आफूसित भएको व्याकरणिक योग्यता फस्टाउने मौका मिलेको छ ।

त्रिभुवन विश्वविद्यालय, नेपालभाषा केन्द्रीय विभागका उपप्राध्यापक मेरा मित्र **श्री ॐकारेश्वर श्रेष्ठ** मेरा प्राध्यापन पेशाका सहयात्री हुनुहुन्छ । वहाँले कति झन्झट नमानी प्रूफ हेर्ने मात्र होइन, अल्सी लागी लोसिएको बेला तानेर हुन्छ कि घचेटेरै हुन्छ, म पुरानो गाडीलाई हिंडाइदिनु हुन्थ्यो । मलाई अनेक

किसिमले गुण लाउने उहाँलाई म हार्दिक धन्यवाद दिन्छु । झर्को नमानी धैर्यपूर्वक टङ्कन गरिदिनुहुने साइवर कम्प्यूटर सर्भिसका श्री मोहनराज पाण्डेलाई पनि धेरै धन्यवाद ।

डा. सुन्दरकृष्ण जोशी
प्राध्यापक
नेपालभाषा केन्द्रीय विभाग
त्रिभुवन विश्वविद्यालय
२०५८।२।३०

# विषय सूची

# छोटो नामावली

| | | | |
|---|---|---|---|
| अ | अघोष/अपादान | नि. नि. | निषेधात्मक निपात |
| अनु | अनुरोधात्मक | | |
| अन्त | अन्तर्केन्द्रिक | ने. भा. | नेपालभाषा |
| अ. पु | अन्यपुरूष | पं. त. | पंचमी तत्पुरूष |
| अ. प्रा. | अल्पप्राण | प. अ. | पर-अभूत |
| अ. रू | अन्तिम रूप | प. पु | पर-पुरूष |
| अ. सं. | अन्तिम संघटक | प. भू. | पर-भूत |
| अक. | अकर्मक कर्ता | प. वि. | परिमाणबोधक विशेषण |
| अधि. | अधिकरण कारक | प. स. | परसर्ग |
| आ. | आश्रित | पू. का. | पूर्वकालिक |
| आ. अ. | आत्म-अभूत | प्र. | प्रत्यय |
| आ. भू | आत्म-भूत | प्र. नि. | प्रश्नवाचक निपात |
| आज्ञा. | आज्ञार्थक | प्रे. क्रि. | प्रेरणार्थक क्रिया |
| इ. | इत्यादि | प्रे. नि. | प्रेरणार्थक निपात |
| उध्द. | उद्धरणार्थक निपात | बहि | बहिर्केन्द्रिक |
| उ. पु | उत्तमपुरूष | ब. व. | बहुवचन |
| उ. वा. | उप-वाक्य | बा. नि. | बाध्यात्मक निपात |
| उभ. | ऊभयलिंगी-प्रत्यय | म. पु. | मध्यमपुरूष |
| क. का | करण कारक | म. प्रा. | महाप्राण |
| का. नि | कामना गर्ने निपात | मू. क्रि. | मूल क्रिया |
| किटा. | किटानक | वर्त. | वर्तमान |
| केनि. | केन्द्रीभूत निपात | वि. | विशेषण |
| कोटि. | कोटिकार | वि. ही. | विभक्तिहीन |
| क्रिपू. वि. | क्रियार्थपूरक विशेषण | व्यु. प्र. | व्युत्पादक प्रत्यय |
| क्रिथ | क्रियार्थक प्रत्यय | ष. त. | षष्ठी तत्पुरूष |
| क्रि. वा. | क्रिया-वाक्यांश | ष. बि. | षष्ठी विभक्ति |
| क्रि. वि. | क्रिया-विशेषण | सं. | संस्कृत/संयोजक/संज्ञा |
| क्रि.सं. | क्रियात्मक संज्ञा | सं. व. | संयुक्त वर्ण |
| गु. क्रि. | गुणबोधक क्रिया | संख्या | संख्यावाचक शब्द |
| च. त. | चतुर्थी तत्पुरूष | स. | सघोष |
| जो. नि | जोडदिने निपात | सक-क-अ. | सकर्मक कर्ता-करण-अपादान |
| तृ. त. | तृतीय तत्पुरूष | स. क्रि. | सहायक क्रिया |
| दुर. | दूरदर्शक | स. त. | सप्तमी तत्पुरूष |
| द्वि. त. | द्वितीय तत्पुरूष | सम्. | सम्बन्ध कारक |
| धा. | धातु | सम्प्र. | सम्प्रदान/कर्म कारक |
| ना. | नाम/नामिक | सर्व. | सर्वनाम |
| ना. वा. | नाम-वाक्यांश | स्व/स्थि. | स्वभाव/स्थितिबोधक |

# १. वर्ण-विन्यास

भाषा विशेषमा हुने ध्वनिको दृश्य-रूप लिपि र लिपिको पनि सबभन्दा सानो इकाइ **वर्ण** हो । वर्ण दुई प्रकारका छन् - **स्वर** र **व्यञ्जन** ।

## १.१ स्वर-वर्ण

अरूको मद्दत नलिईं मुक्त रूपले उच्चारण हुन सक्ने वर्णलाई स्वर-वर्ण भनिन्छ । नेपालभाषामा **अ, आ, इ, उ, ए, ओ** गरी ६ वटा मुख्य स्वर-वर्ण छन् । साउँ अक्षर चिनाउँदा पढाइने **अ, आ, इ, ई, उ, ऊ, ऋ, ॠ, ऌ, ॡ, ए, ऐ, ओ, औ, अं, अः** संस्कृत वर्णमालामा आधारित परंपरागत स्वर-वर्ण हुन्, जसमा ह्रस्वका दीर्घ रूप पनि छन्, **ऐ (अइ), औ (अउ)** जस्ता द्विस्वर (संयुक्त स्वरवर्ण) पनि छन्, कहिले प्रयोगमा नआउने **ॠ, ऌ, ॡ** पनि छन्, **अ**-मा अनुस्वार र विसर्ग लगाइएका **अं** र **अः** पनि छन् । भारोपेली भाषाकै व्याकरण अनुसार पनि मुख्य मुख्य स्वर-वर्णमा **अ, इ, उ, ए, ओ, ऋ,** ६ वटा मात्र छन् । नेपालभाषामा भारोपेली तथा नेपालीभाषा विपरीत **अ** र **आ**-का छुट्टा छुट्टै ह्रस्व र दीर्घ रूप छन् । **ऋ** केही आगन्तुक तत्सम शब्दहरूमा मात्र प्रयोग हुन्छ, जस्तै - ऋण, ऋतु, ऋषि, ऋद्धि, ऋग्वेद । नेपालभाषाकै शब्दमा यसको प्रयोग छैन । **ॠ, ऌ, ॡ**-को प्रयोग अरू भाषाहरूमा पनि छैनन् ।

**अं**-को अनुस्वार र **अः**-को विसर्ग **अ**-मा आधारित हुनाले विशुद्ध स्वर-वर्णमा यिनीहरूको गणना हुँदैन । **ऐ (अइ)** र **औ (अउ)** द्विस्वर हुन् । अतः नेपालभाषाको आफ्नै प्रकृति अनुरूप मूलरूपमा ६ वटा मात्र स्वरवर्ण हुन् - **अ, आ, इ, उ, ए, ओ** । भाषावैज्ञानिक पद्धति अनुसार भने स्वर विशेषको उच्चारण गर्दा जिब्रोको कुन भाग कति माथिसम्म उठेको छ भन्ने हिसाबले निम्नानसुार नामांकन गरिएको हुन्छ -

| | अग्र | केन्द्रीय | पश्च |
|---|---|---|---|
| **उच्च** | इ | | उ |
| **मध्य** | ए | अ | ओ |
| **निम्न** | | आ | |

| | |
|---|---|
| इ | उच्च-अग्र |
| उ | उच्च-पश्च |
| ए | मध्य-अग्र |
| ओ | मध्य-पश्च |
| अ | मध्य-केन्द्रीय |
| आ | निम्न-केन्द्रीय |

**अ, आ, इ, ई** चार वर्णका दीर्घ रूप हुन् - **अः, आः, ई, ऊ । ए र ओ** सन्दर्भ हेरी बुझ्नेगरी ह्रस्व दीर्घ दुवै अर्थमा प्रयोग गरी आएकोमा हाल भने कसैकसैले एकारपछाडि स्वर-वर्ण **ए** (e) को अर्थमा हलन्त अर्धस्वर **य्** जोडी **ए्**-को दीर्घ रूप दिएको देखिन्छ । **ओ**-को हकमा त्यसको दीर्घ रूप दिन सजिलो हुने गरी ओष्ठ्य अर्धस्वर **व**-सित व्यञ्जन जोडी अकारान्त गरी आवश्यकतानुसार त्यसपछाडि विसर्ग राख्ने गरेको पनि देखिन्छ । यसरी नेपालभाषामा स्वर-वर्ण **ओ**-को वैकल्पिक रूप अर्धस्वर **-व** हुनाले **ओ**-को मान्यता पनि ऐच्छिक मात्र हुनेगरेको छ ।

### १.१.१ स्वर-वर्णमा ह्रस्व-दीर्घको व्यतिरेक

| स्वर | शब्द | अर्थ |
|---|---|---|
| अ | ख्व | रोउ (आज्ञा) |
| | ख्वः | खूर |
| आ | का | धागो |
| | काः | काहार बाजा |
| इ | जि | म (सर्व) |
| | जी | जिरा |
| उ | कु | भारी |
| | कू | कोदाली |
| ए | यें | काठमाडौं |
| | येंय् /यें | काठमाडौं (अधि.) |

| | |
|---|---|
| देने (दे-ह्रस्व) | सुत्ने |
| दे / देय् (दे-दीर्घ) | देश |

## १.१.२ अनुनासिकको ह्रस्व-दीर्घ रूप

नाँके उच्चारण जनाउने चिन्हलाई **अनुनासिक** भनिन्छ। अनुनासिक दुई किसिमका छन् - (क) चन्द्रबिन्दु र (ख) शिरबिन्दु।

### (क) चन्द्रबिन्दु / ँ /

नाक र मुखबाट एकैसाथ उच्चारण हुने नाँके स्वर जनाउने स्वर-चिन्हलाई चन्द्रबिन्दु / ँ / भनिन्छ। यो सम्बन्धित अक्षरको डिकोमाथि रहन्छ। नेपालभाषामा यस चिन्हलाई **मिलाफुति** भनिन्छ। मात्रामा यो ह्रस्व रूपको हुन्छ।

### (ख) शिरबिन्दु / ं /

मुख-विवरमा ध्वनि-अवयवहरू थुनिएर केवल नाकबाट मात्र उच्चारण हुने, र पछिबाट जोडिएका ध्वनि-अवयवहरू विस्फोटका साथ खुल्न गई नाँके उच्चारण हुने चिन्हलाई शिरबिन्दु / ं / भनिन्छ। मात्र थोप्लाको रूपमा रहेको सम्बन्धित अक्षरको डिकोमाथि रहने यस चिन्हलाई नेपालभाषामा **सिन्हः फुति** (टीकाबिन्दु) भनिन्छ। मात्रामा यो दीर्घरूपको हुन्छ।

चन्द्रबिन्दु र शिरबिन्दु यसरी दुवै नाँके उच्चारणको चिन्ह दुवै सम्बन्धित अक्षरको डिकोमाथि लगाउने भए पनि, अभ्म उच्चारण पनि नाँके भएको कारणले केही हदसम्म मिले पनि उच्चारण गर्ने तरीका, उच्चारणको मात्रा र चिन्ह पनि फरक देखिन्छन्। **नासिक्य वर्ण** ङ्, ञ्, ण्, न्, म्-को विकल्पमा शिरबिन्दुको प्रयोग पनि गर्न सकिन्छ। यी नासिक्य वर्णहरू अगिल्ला वर्णहरूको संसर्गले गर्दा दीर्घ रूपका हुन्छन्।

| | | | | |
|---|---|---|---|---|
| अङ्गः | वा | अंगः | भित्ता | |
| पञ्जः | वा | पंजः | पिंजडा | |
| घण्टी | वा | घंटी | सानो घण्ट | |
| चिन्ता | वा | चिंता | पीर, सुर्ता | |
| खम्पा | वा | खंपा | तिघ्रा | इ. |

यसरी शिरबिन्दुको गिन्ति व्यञ्जनको नासिक्य वर्णको विकल्पमा हुन्छ।

### (ग) चन्द्रबिन्दु र शिरबिन्दुको प्रयोग

नेपालभाषामा चन्द्रबिन्दु र शिरविन्दुको प्रयोग वार्णिक रूपमा बेग्लै किसिमले गरिन्छन् । नाँके उच्चारणमा चन्द्रबिन्दुलाई त्यसको ह्रस्व र शिरबिन्दुलाई दीर्घ रूप मानी यसरी लेख्ने गर्छन् -

| ह्रस्व रूप | अर्थ | वार्णिक दीर्घ रूप | ध्वनितात्विक रूप | अर्थ |
|---|---|---|---|---|
| दँ | उठ् (आज्ञा) | / दं /[१] | [दँः] | डाँठ |
| कँ | भन् (आज्ञा) | / कं / | [कँः] | काँडा |
| तुँ (त्वँ) | चुर्नी | / तुं / | [तुँ] | इनार इ. |

**शिरबिन्दुलाई चन्द्रबिन्दुको दीर्घ रूप मान्नुको कारण**

१. चन्द्रबिन्दुको प्रयोगले मात्र अक्षर रूप दीर्घ हुन्न । तर शिरबिन्दुको प्रयोगले भने अक्षर रूप दीर्घ हुन्छ ।
२. शिरबिन्दु स्वयं नासिक्य हो भने चन्द्रबिन्दुले प्रयोग गरिएको अक्षरलाई नासिकीकरण गर्दछ । यसरी दुवै नाँके ध्वनिमा पर्दछन् ।
३. चन्द्रबिन्दु लेख्नु भन्दा शिरबिन्दु लेख्नु सजिलो छ, र समयको पनि किफायत हुन्छ ।
४. साधारण टाइप-राइटरमा चन्द्रबिन्दु छैन, शिरबिन्दु भने छ । त्यस्तो टाइप-राइटरमा टङ्कन गर्दा टाइप गरिएको शिरबिन्दुलाई आवश्यकतानुसार हातले मिलाइरहनु पर्ने झंझट हुन्छ ।

### १.१.३ द्विस्वर

अ आ इ ई उ ऊ --------- मा स्वर भनी चिनाइएका दुईवटा अक्षर **ऐ** (अइ) र **औ** (अउ) देवनागरी लिपिमा एकै अक्षरले जनाउन सक्ने व्यवस्था भए पनि वास्तवमा ती दुवै स्वर-क्रम तथा द्विस्वर हुन् । जसलाई रोमन लिपिमा लेख्दा **ऐ**-लाई *ai* र **औ**-लाई *au* लेख्नु पर्दछ । **अइ,** अउ बाहेक नेपालभाषामा अरू पनि निम्नानुसारका द्विस्वरहरू छन् -

| द्विस्वर | उदाहरण | अर्थ |
|---|---|---|
| अइ (ऐ) | अइसा | रुन्चे (रोग) |
| | कइ | पिलो |
| अउ (औ) | अउल | औलो |
| | सउ | गोबर |
| आइ | आइस्ता | आयस्ता |
| | आइँचा | पाडो (तोतेबोली) |
| | ताइँ | फूर्ति |
| आउ | आउँ | रगतमासी |
| | ह्याउँ | रातो |
| उइ | उइ | जनाति |
| | छुइ | पनाति |
| इउ | खिउँ | अन्धकार |
| | लिउँ | लिउन |
| अय् | अय् | त्यसरी |
| | ल्वय् | रोग |
| आय् | म्ह्याय् | छोरी |
| | ग्वाय् | जुंगा |
| | माय् | मास इ. |

द्विस्वर **अय्**मा अन्तिम **-य्** अर्धस्वर हुन् तापनि यहाँ स्वर **ए**-को सट्टामा प्रयोग गरिएको छ । रोमन लिपिमा लेख्दा **अय्**लाई ɘe र **आय्**लाई æ लेख्ने चलन छ । यसरी e को नेपालभाषामा आलेखन गर्दा व्यञ्जनपछि **ए** र स्वरपछि **य्** आवश्यकतानुसार ठाउँ हेरी लेख्ने चलन छ ।

**अय्, आय्** लाई सग्लो स्वर-वर्णमा लेख्ने चलन अनुरूप कसै कसैले यी दुवैलाई स्वर-वर्णका रूपमा मानेका छन् तापनि यहाँ द्विस्वरमा राखिनुको स्पष्टिकरण स्वरूप केही प्रकाश पार्ने चेष्टा गरिएको छ । नेपालभाषामा दुई स्वर बीचको **स्, च्, ज्, ल्** बाट **य्** हुने व्यवस्थानुरूप निम्नानुसार परिवर्तन भएका हुन् तापनि हालसम्म पनि करण कारक (क.का.) र अधिकरण कारक (अधि) मा **य्** को ठाउँमा पूर्वरूपकै **स्, च्, ज्, ल्** नै प्रयोग हुन्छन्, जस्तै -

| ध्वनि-परिवर्तन | उदाहरण | अर्थ | प्रयोग |
|---|---|---|---|
| स > य् | खस > खय् | क्षेत्री | |
| | न्हास > न्हाय् | नाँक | न्हासं (क.का.) न्हासय् (अधि) |
| च > य् | ग्वाच > ग्वाय् | जुङ्गा | ग्वाचं (क.का.) ग्वाचय् (अधि) |
| | ग्वच > ग्वय् | सुपारी | ग्वचं (क.का.) ग्वचय् (अधि) |
| ज > य् | सालमि > साय्मि | मानन्धर | |

यसरी परिवर्तित रूप **य्** मात्र होइन पूर्व रूप **स्, च्, ज्,** पनि आवश्यकतानुसार आज पनि प्रयोगमा छन् भने सो **य्** (e) सहितको **अय्, आय्**लाई एउटा सग्लो स्वर-वर्णका रूपमा नलिइएको हो । लेख्दाखेरि पनि दुइटा स्वरसँगै लेखिने तिनीहरूलाई द्विस्वरकै रूपमा राख्न मनासिव देखिन्छ ।

## १.२ व्यञ्जन-वर्ण

स्वर नभई उच्चारण गर्न नसकिने वर्णलाई व्यञ्जन-वर्ण भनिन्छ । **क्** (K) लाई हामी उच्चारण गर्न सक्तैनौं । तर **क** (Ka) लाई भने उच्चारण गर्न सक्छौं । किनभने बद्ध **क्** (K) लाई यहाँ स्वर **अ** (a) आई मुक्त गरिदिएको छ । स्वर र स्वर सहितको वर्णलाई अक्षर र स्वर रहित वर्णलाई हामी व्यञ्जन भन्दछौं । व्यञ्जन-वर्ण लेख्दा अनिवार्य रूपमा खुट्टा काट्नु पर्दछ, जस्तो -

| **क-वर्ग** | **च-वर्ग** | **ट-वर्ग** | **त-वर्ग** | **प-वर्ग** | **अन्तस्थ** | **उष्म** | **संयुक्त** |
|---|---|---|---|---|---|---|---|
| क् | च् | ट् | त् | प् | य् | श् | क्ष् |
| ख् | छ् | ठ् | थ् | फ् | र् | ष् | त्र् |
| ग् | ज् | ड् | द् | ब् | ल् | स् | ज्ञ् |
| घ् | झ् | ढ् | ध् | भ् | व् | ह् | |
| ङ् | ञ् | ण् | न् | म् | | | |

प्रस्तुत तालिका संस्कृत व्याकरण अनुसारको हो । नेपालभाषाको मात्र विचार गर्दा **ट**-वर्गमा ५ अक्षर, ऊष्मका **श, ष** र संयुक्तका **क्ष, त्र, ज्ञ, क**-वर्गको नासिक्य **ङ, च**-वर्गको नासिक्य **ञ** समेत जम्मा १२ वर्ण झिकी **त**-वर्गको नासिक्य **न**-को महाप्राण **न्ह, प**-वर्गको नासिक्य **म**-को महाप्राण **म्ह** र

अन्तस्थ ल-को महाप्राण ल्ह समेत गरी ३ थपी जम्मा २७ (३६-१२+३=२७) वर्ण छन् । उच्चारण गर्ने थलो र ढाँचानुसार नेपालभाषामा भएका वर्णलाई निम्ननुसार वर्गीकरण गर्न सकिन्छ -

| ढाँचा ↓ / → थलो | | ओष्ठ्य | | दन्तमूलीय | | तालव्य | | कण्ठ्य | | स्वरयन्त्रमुखी | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | अ. | स. | अ. | स. | अ. | स. | अ. | स. | अ. | स. | |
| स्पर्श | अ. प्रा. | प् | ब् | त् | द् | | | क् | ग् | | | ६ |
| | म. प्रा. | फ् | भ् | थ् | ध् | | | ख् | घ् | | | ६ |
| स्पर्घर्ष | अ. प्रा. | | | च् | ज् | | | | | | | २ |
| | म. प्रा. | | | छ् | झ् | | | | | | | २ |
| नासिक्य | अ. प्रा. | | म् | | न् | | | | | | | २ |
| | म. प्रा. | | म्ह् | | न्ह् | | | | | | | २ |
| संघर्षी | | | | स् | | | | | | | ह् | २ |
| कम्पन | | | | | र् | | | | | | | १ |
| पार्श्विक | अ. प्रा. | | | | ल् | | | | | | | १ |
| | म. प्रा. | | | | ल्ह् | | | | | | | १ |
| अर्धस्वर | | | व | | | | य् | | | | | २ |
| जम्मा | | २ | ५ | ५ | ९ | | १ | २ | २ | | १ | २७ |

**टिप्पणी**

(क) व्यञ्जन-वर्ण क ख ग घ ......... पढ्ने परम्परा भित्रै छ, जो कण्ठ्यबाट सुरु गरी संयुक्त ज्ञ-बाट अन्त गरिन्छ । भाषावैज्ञानिक पद्धतिमा भने बाहिरका ध्वनि-अवयवहरू ओठबाट उच्चारित ओष्ठ्यबाट सुरु गरी क्रमश: भित्रतिर ताक्दै स्वरयन्त्रमुखबाट उच्चारित ह्-मा अन्त गरिन्छ । नेपालभाषाका व्यञ्जन-वर्ण, तिनीहरूको नाउँ र उच्चारण गर्ने ध्वनि-अवयवहरू यस प्रकारका छन् -

| तल्ला ध्वनि-अवयव | ध्वनिको नाम र वर्णहरू | माथिल्ला ध्वनि-अवयव |
|---|---|---|
| ओठ | ओष्ठ्य<br>प् फ् ब् भ् म् म्ह् व् | ओठ |
| जिब्रोको टुप्पो | दन्तमूलीय<br>त् थ् द् ध् न् न्ह्<br>च् छ् ज् झ्<br>स् र् ल् ल्ह् | दाँतको फेद |
| जिब्रोको अगिल्लो भाग | तालव्य<br>य् | कडा तालु |
| जिब्रोको पछिल्लो भाग | कण्ठ्य<br>क् ख् ग् घ | नरम तालु |
| स्वरयन्त्रमुख | स्वरयन्त्रमुखी<br>ह् | स्वरयन्त्रमुख |

(ख) नेपालभाषामा / त् /, / द् / दन्तमूलीय हो, तर / र् / अगाडि तिनीहरू दन्त्य हुन्छन्, जस्तै -

/ चन्द्रमा / **चन्द्र**, / सन्त्रासि / **सुन्तला** इ.

(ग) वर्णका रूपमा नेपालभाषामा ङ्, ञ्, छैनन् । तर संवर्णका[२] रूपमा भने छन् । **क**-वर्गका वर्णअगाडि **ङ** र **च**-वर्गका वर्णअगाडि नासिक्य **ञ** संवर्णका रूपमा आउँछन्, जस्तो -

/ हेङ्ग्वाः / **गोल**, / पञ्जः / **पिंजड़ा** इ.

(घ) / र् / बाहेक सम्पूर्ण इकार र एकार व्यञ्जन-वर्ण तालव्यीकरण हुन्छन्, जस्तै -

| **वार्णिक**[३] | **ध्वनितात्विक**[४] | **अर्थ** | |
|---|---|---|---|
| / की / | [क्यी] | कीरो | |
| / केरा / | [क्येरा] | केरा | इ. |

(ङ) नेपालभाषामा उकार र ओकार व्यञ्जन-वर्णहरू ओष्ठीकरण हुन्छन्, जस्तै -

| | | | |
|---|---|---|---|
| / पु / | [प्वु] | बिउ | |
| / पो / | [प्वोः] | पोको | |
| / कु / | [क्वु] | भारी | |
| / को / | [क्वोः] | काग | इ. |

(च) नेपालभाषामा स्पर्श-वर्णहरू मात्रै तीन प्रकारका छन् -

(अ) विना घर्षणका स्पर्श-वर्णहरू

*ओष्ठ्य:* प्, फ्, ब्, भ्, म्, म्ह्;
*दन्तमूलीय:* त् , थ् , द् , ध् , न्, न्ह्
*कण्ठ्य:* क्, ख्, ग्, घ्,

(आ) घर्षण सहितका स्पश-वर्णहरू

*दन्तमूलीय:* च्, छ्, ज्, झ्

(इ) *स्वरयन्त्रमुखी:* ह्

यिनमा पहिलो (अ) का वर्णहरू स्पर्श मात्र हुन्, जहाँ स्वरको संसर्गले मुक्ति

पाएका अवस्थामा पनि तिनीहरूको उच्चारण क्षणिक मात्र हुन्छ, लम्ब्याउन खोज्दा अन्तिम स्वरको उच्चारण मात्र सुनिन्छ ।

दोस्रो (आ) घर्षण सहितको स्पर्श हुनाले स्वर-वर्णको संसर्गले मुक्ति पाइसकेको अवस्थामा पनि ध्वनि-अवयवहरूको अन्तर सांगुरिएको हुँदा **च, छ, ज, झ्**-को उच्चारणमा **घर्षण**को आवाज प्रष्ट सुनिन्छ । त्यसैले स्पर्श र घर्षण दुवैको संयोगात्मक भावना अनुरूप यसको नाम **स्पघर्ष** (Africates) राखिएको छ । यसरी संयोग नगरी यिनीहरूलाई **स्पर्श-संघर्षी** भन्ने पनि चलन छ ।

तेस्रो (इ) स्वरयन्त्रमुखी ह्को उच्चारण-स्थल रुद्रघण्टी हो, जहाँ स्वरयन्त्रहरू (Vocal Cords) आपसमा जोडिन्छन् र स्वरको सहायताले सो वर्णको उच्चारणले निकासा पाइसकेपछि पनि स्वरयन्त्रहरूको अन्तर साह्रै सांगुरिएको हुँदा संघर्षको घर्षण स्वर स्पष्ट सुनिन्छ र लगातारको उच्चारणमा पनि दन्तमूलीय, ओष्ठ्य स्पर्श विपरीत, स्पर्घष अनुरूप यिनै ह्कै उच्चारण सुनिने हुनाले स्पघर्ष र स्वरयन्त्रमुखी दुवै निरन्तर (Continuants) ध्वनिका रूपमा मानिन्छन् ।

(छ) ओष्ठ्य स्पर्श-वर्णहरू **प्, फ्, ब्, भ्,** ओष्ठ्य अर्धस्वर **व**-सित जोडिएर आउँदा, त्यस्तै उकारान्त हुँदा श्वसित (Breathy) हुन्छ ।

श्वसित विशेषण हो, यसको संज्ञा-रूप श्वसन हुन्छ । श्वसन भनेको उच्चारण गर्दाको प्रश्वासमा सुत्र सकिने फुकेको दन्त्योष्ठ वायुको धार हो जसको उच्चारणमा ध्वनि-अवयवहरूको अन्तराल अत्यन्त सांगुरिएको हुन्छ ।

| **वार्णिक** | **ध्वनितात्विक** | **अर्थ** |
|---|---|---|
| / पु / | प् ह - उ = [प्हु] | अंकुर, बीज |
| / प्वः / | प् ह - वः = [प्ह्वः] | पोको |
| / फुइँ / | फ् ह - उइँ = [फ्हुइँ] | फुर्ति |
| / फ्वः/ | फ् ह - व = [फ्ह्वः] | थुंगो |
| / बुँ / | ब् ह - उँ = [ब्हुँ] | खेत |
| / ब्व / | ब् ह व = [ब्ह्व] | भाग |
| / भु / | भ् ह - उ = [भ्हु] | थाल |
| / भ्व / | फ् ह - उ = [भ्ह्वय] | भोजन इ. |

(ज) / र / सुरु र अन्तमा **कम्पन (trill)** हुन्छ, दुई स्वरको बीचमा पर्दा **उत्क्षिप्त (flap)** हुन्छ । जिब्रोको टुप्पोले दाँतको जरामा बिजुलीको

घण्टीमा झैं लगातार हानिरहेको कम्पन र एकपल्ट हानी जिब्रो तल झरेको उत्क्षिप्त हुन्छ -

| वार्णिक | ध्वनितात्विक | अर्थ |
|---|---|---|
| बजार | [बजार ˎ] | बजार |
| रोग | [र् ˎ - ओग्] | व्यथा |

तर -

| | | |
|---|---|---|
| केरा | [क्येरा] | फल |
| बरे | [बरे] | थर |

## १.२.१ व्यञ्जन-वर्णको व्यतिरेक

| स्पर्श | शब्द | व्यतिरेक |
|---|---|---|
| / प् / | पा | बञ्चरो |
| / फ् / | फा | सुंगुर |
| / ब् / | बा: | बुबा |
| / भ् / | भा: | मूल्य |
| / त् / | ता | पुल |
| / थ् / | था | बजाउ (आज्ञा) |
| / द् / | दा: | बोसो |
| / ध् / | धा: | धार |
| / क् / | का | धागो |
| / ख् / | खा | कुखुरा |
| / ग् / | गा: | खाल्टो |
| / घ् / | घा: | घाउ |
| **स्पघर्ष** | | |
| / च् / | चा | माटो |
| / छ् / | छा: | छ्यापी |
| / ज / | जा | भात |
| / झ् / | झा: | झार |

| नासिक्य | शब्द | व्यतिरेक |
|---|---|---|
| / म् / | मा | बिरुवा |
| / म्ह् / | म्ह | शरीर |
| / न् / | न | फलाम |
| / न्ह् / | न्हा | मुछ (आज्ञा) |
| **संघर्षी** | | |
| / स् / | सा | गाई |
| / ह् / | हा | माउरी |
| **कम्पन** | | |
| / र् / | रा:ग | शास्त्रीय गाने |
| **पार्श्विक** | | |
| / ल् / | ला: | न्याल |
| / ल्ह् / | ल्हा: | हात |
| **अर्धस्वर** | | |
| / व् / | वा: | हप्ता |
| / य् / | या: | यात्रा |

**टिप्पणी**

(अ) नेपालभाषामा मूल रूपमा र् थिएन, दन्तमूलीय त-वर्गका वर्णहरू ध्वनि-परिवर्तन भई र् भएका हुन् भन्ने बारे शर्मा (ने. सं. १०९०: ६७-८५) ले निम्न उदाहरणहरू प्रस्तुत गरेका छन् -

| ध्वनि-परिवर्तन | उदाहरण | अर्थ |
|---|---|---|
| त् > र् | छतका > छत्का > छर्का | एक रूपैयाँ |
| | वाताचा > बात्चा > बार्चा | कटौरा |
| थ् > र् | गथेल्या: > धरेल्या: > घर्ल्या (यो किसान बोली हो ।) | कसो हो नि ! |
| द् > र् | मदु > मरु | छैन |
| | दुरु > दुरु | दूध |

| ध्वनि-परिवर्तन | उदाहरण | अर्थ |
|---|---|---|
| ध् > र् | त:धी > त:ह्री > त:री | ठूलो |
| | सिधा > सिह्रा > सिरा | सिदा |
| न् > र् | जन्म - न्हि > जर्मनी | जन्मदिन |

यसरी हुने ध्वनि-परिवर्तन शब्दको सुरु वा अन्तको नभई बीचको मात्र छ ।

(आ) नेपालभाषामा मूल रूपमा र् नभएकै कारणले यसको अरू वर्णसित न्यूनतम युग्म (minimal pair) दिन नसकी आगन्तुक शब्द **रा:ग** मात्र दिइएको छ ।

(इ) कतिपय ठाउँमा पूर्वरूपको **त्**-वर्गको वर्गीय वर्ण नसुहाई अनिवार्य रूपमा र् नै नलेखी नहुने भइसकेको छ, जस्तो - **दुदुको दुरु, वन्देको वरे** इ.

## १.२.२ संयुक्त व्यञ्जन

दुईवटा व्यञ्जन आपसमा जोडिएमा संयुक्त व्यञ्जन हुन्छ । संयुक्त व्यञ्जन शब्दको सुरु, बीच र आगन्तुक शब्द भए अन्तमा पनि आउन सक्छन् ।

संयुक्त व्यञ्जन दोस्रो वर्ण अर्धस्वर **य** वा **व** भएमा सो शब्दको सुरु र बीचमा एउटै अक्षर (syllable) भित्र आसीन भइआउँछन्, अर्धस्वर बाहेक अरू वर्ण भएमा नेपालभाषाको आफ्नै शब्द भए सो बीचमा मात्र, त्यो पनि बाँडिएर (अगिल्लो वर्ण अगिल्लो अक्षरमा र पछिल्लो वर्ण दोस्रो अक्षरमा रही) आउँछन् । नेपालभाषाका संयुक्त व्यञ्जन वर्णलाई निम्नानुसार विश्लेषण गर्न सकिन्छ -



## १.२.२.१ शब्दको सुरुमा संयुक्त व्यञ्जन

### (क) नेपालभाषाका आफ्नै शब्दहरू

नेपालभाषाका आफ्नै शब्दहरूमा सुरुमा संयुक्त व्यञ्जन जो आउँछन् त्यसमा दोस्रो वर्ण अर्धस्वर **य** वा **व** हुनु पर्दछ, र अगिल्लो वर्णको हकमा **य्** **व्** **र्** बाहेक अरू कुनै पनि व्यञ्जन हुन सक्छ । दोस्रो वर्ण अर्धस्वर **व** भएमा अगिल्लो वर्ण **य्**, **व्**, **र्** बाहेक महाप्राणित नासिक्य **न्ह्** र **म्ह्** पनि वर्जित छन् । जस्तै -

| | -य | अर्थ | -व | अर्थ |
|---|---|---|---|---|
| / प् / | प्यँः (-न) | चाक | प्वँः (-न) | खाली छ (स्व/स्थि) |
| / फ् / | फ्यये | चाट्नु | फ्वये | अन्न फुलाउनु |
| / ब् / | ब्यने | फुस्किनु | ब्वने | पढ्नु |
| / भ् / | भ्यगः | भिउँट | भ्वय् | भोज |
| / म् / | म्ये | गीत | म्वः (-ल) | मोहर |
| / म्ह / | म्ह्याय् | छोरी | --- | --- |
| / त् / | त्याये(त्याय्) | जित्नु | त्वाय् | मीत |
| / थ् / | थ्याये(थ्याय्) | पत्याउनु | थ्वाये | लात हान्नु |
| / द् / | द्यः (-व) | ईश्वर | द्वः (-ह) | साँढे |
| / ध् / | ध्यने | काट्नु | ध्वः (-ल) | पंक्ति |
| / न्ह् / | न्ह्यने | अटाउनु | --- | |
| / क् / | क्यने | देखाउनु | क्वः (-ख) | काग |
| / ख् / | ख्यः (-ल) | क्षेत्र | ख्वः (-ल) | खुर |
| / ग् / | ग्यये | साट्नु | ग्वये | बन्द गर्नु |
| / घ् / | घ्यः (-ल) | घिउ | ग्वय् | सुपारी |
| / च् / | च्यः (-ल) | नोकर | च्वः (-का) | छेउ |
| / छ् / | छ्याये | कुट्नु | छ्वये | पठाउनु |
| / ज् / | ज्याये | रच्नु | ज्वये | चुहिनु |
| / झ् / | झ्याः (-ल) | झ्याल | झ्वः (-ल) | पंक्ति |
| / स् / | स्याये | मार्नु | स्वये | हेर्नु |
| / ल् / | ल्यये | केलाउनु | ल्वये | सुहाउनु |
| / ह् / | ह्याउँ | रातो | ह्वये | फक्रनु |

| | -य | अर्थ | -व | अर्थ |
|---|---|---|---|---|
| / ल्ह / | ल्ह्ये | बामेसर्नु | ल्ह्वये | बान्ता गर्नु |
| / र् / | -- | -- | -- | -- |
| / य् / | -- | -- | -- | -- |
| / व् / | -- | -- | -- | -- |

**(ख) अकारान्त संयुक्त वर्ण व को विकल्पमा सगलो ओकारान्त वर्ण**

**व** ओष्ठ्य अर्धस्वर हो, जो अकारान्त भएको कारणले अगोलित छ भने **ओ** मध्यपश्च भएको कारगले गोलित छ । लेखाइमा पहिले ओकारान्तको बढी प्रयोग थियो, हाल **व**-सित जोडिएको अगोलित संयुक्त वर्णको प्रयोग बढी छ । **काग**लाई नेपालभाषामा गोलित ओठको **को** र अगोलित **क्वः** दुवै प्रचलनमा छ, त्यस्तै **छेउ/टुप्पो** लाई **चो** र **च्वः** दुवै लेख्ने चलन छ तापनि एकै व्यक्तिले एउटै लेखमा कतै **ओ**-कारान्त र कतै **व**-सित जोडिएको अकारान्तको प्रयोग गरेको भने राम्रो मानिन्न ।

**(ग) आगन्तुक शब्दहरू**

आगन्तुक शब्दहरूमा सुरुको संयुक्त व्यञ्जन **य, व** बाहेक अरू व्यञ्जनसित पनि जोडिन सक्छन् तापनि त्यस्ता शब्दहरू थोरै मात्र छन्, जस्तै -

| | | |
|---|---|---|
| / प्र / | प्रिति **प्रेम** | ल्कव **संस्था** |
| / श्र / | श्रृष्टि **सिर्जना** | स्कूल **विद्यालय** |

## १.२.२.२ शब्दका बीचमा संयुक्त व्यञ्जन

शब्दको बीचमा आउने संयुक्त व्यञ्जन मूल रूपमा दुई किसिमका छन् - (क) एउटै अक्षर भित्र रहने र (ख) एउटै अक्षर भित्र नरही अगिल्ला र पछिल्ला अक्षरहरूमा बाँडिने ।

**(क) एउटै अक्षरभित्र रहने**

एउटै अक्षर भित्र रहने संयुक्त व्यञ्जनमा दोस्रो व्यञ्जन अर्धस्वर **-य** वा **-व** नै हुनु पर्दछ, जस्तै -

| -य | अर्थ | -व | अर्थ | |
|---|---|---|---|---|
| शा - क्य | बाँडा | या - क्व | काखी | |
| ता - क्या | ताप्के | ध्वम् - प्वा: | जुठ्यान | इ. |

**(ख) अगिल्ला र पछिल्ला अक्षरहरूमा बाँडिएर रहने**

अर्धस्वरहरू **य्, व्**-सित जोडिए मात्र संयुक्त व्यञ्जनहरू एउटै अक्षरभित्र पर्दछन्, अर्धस्वर बाहेक अरू व्यञ्जनसित जोडिएका संयुक्त व्यञ्जनहरू अगिल्ला र पछिल्ला अक्षरमा बाँडिएर आउँछन् । यसरी बाँडिएर आउने व्यञ्जनहरू पनि द्वित्व हुने र नहुने गरी दुई भागमा विभाजित छन् ।

**(अ) द्वित्व हुने संयुक्त व्यञ्जनहरू**

यस्ता व्यञ्जनहरू थोरै छन्, त्यसमा पनि धेरै जसो अनुकरणात्मक तथा अनुरणात्मक क्रिया-विशेषणहरू बढी देखिन्छन्, जस्तै -

| सं. व. | उदाहरण | अर्थ | व्याकरणिक कोटी |
|---|---|---|---|
| / प्प / | सप् - पा | गुइँठा | संज्ञा |
| / त्त / | ख्वात् - त | फुत्त | अनुकरणात्मक, क्रि. वि. |
| / क्क / | साक् - क | मिठो गरी | क्रिया-विशेषण |
| / म्म / | यम् - मा | आमै | विष्मयादिबोधक |
| / न्न / | कन् - ना | करुणा | भाववाचक संज्ञा |
| / र्र / | फ्यार् - र | थरर | अनुकरणात्मक |
| / ल्ल / | सुल् - ल | ललत | क्रिया-विशेषण |
| / स्स / | खस् - स | खसक्क | क्रिया-विशेषण |

**(आ) द्वित्व नहुने संयुक्त व्यञ्जनहरू**

द्वित्व नहुने गरी शब्दको बीचमा आउने संयुक्त व्यञ्जनहरू अर्ध स्वरसित जोडी आउने बाहेक अरू मूल रूपमा छँदै थिएनन् । तर तिब्बर्मी (Tibeto-Burman) परिवारका भाषाहरूको एकाक्षरी प्रवृत्तिले गर्दा तीन वा तीन भन्दा बढ्ता अक्षर भएका शब्दहरूमा बीचका अक्षरहरूको स्वर लोप भई अक्षरहरू घट्न जानाले सिर्जिएका हुन् । यस्ता संयुक्त वर्णका पहिलो वर्ण अगिल्लो अक्षरको अन्तमा र दोस्रो वर्ण पछिल्लो अक्षरको सुरुमा बाँडिएर रहेका हुन्छन्, जस्तै -

| संयुक्त वर्ण | पूर्व रूप | आधुनिक रूप | अर्थ |
|---|---|---|---|
| / प्त / | ल - प - ते | लप् - ते | पात |
| / प्ल / | त - पु - लि | तप् - लि | टोपी |
| / क्प / | छि - कः - पिं | छिक् - पिं | तपाईंहरू |
| / क्त / | धु - कु - ति | धुक् - ति | भण्डार |
| / क्म / | च्व - क - मु - लु | च्वक् - मु - लु | मुतुवा |
| / क्स / | चा - कु - सि | चाक् - सि | चाकसी |
| / ख्त / | न - खः - त्या | नख् - त्या | चाड सकिएपछि छोरी, भान्जा-भान्जीलाई ख्वाइने भोज |
| / ब्ल / | दु - ब - लि | दुब् - लि | रक्सी पार्दा थाप्ने माटोको विशेष भाँडो |
| / ग्त / | भ्व - ग - त्या | भ्वग् - त्या | भोगटे |
| / ग्ज / | मु - गु - जि | मुग् - जि | संजाप |
| / ग्म / | बुँ - ग - मि | बुँग् - मि | बुँगमतीको व्यक्ति |
| / ग्ल / | भु - ग - लु - न | भुग् - लुं | झोक्राएर (क्रि.वि.) |
| | भा - ग - त्या- न | भाग् - त्यां | झोंक्रो फिजाएर (क्रि.वि.) |
| / ज्ग / | ल - ज - गा - ल | लज् - गाः | व्यवसाय |
| / ज्भ / | पु - जा - भ - ल | पुज् - भः | थाली |
| / म्प / | ध - म - प | धम् - प | गाग्री |
| / म्च / | भउ - म - चा | भम् - चा | दुलही |
| / म्थ / | आ - मु - थे | आम् - थे | त्यसरी |
| / म्ख / | आ - म - खो - रा | आम् - खो - रा | अँखरा |
| / म्ब / | अ - म - ब - ल | अम् - बः | अमला |
| / म्स / | चि - मि - सँ | चिम् - सँ | रोम (सं) |
| / म्ल / | आ - म - लि | आम् - लि | लप्सी |
| / न्त / | अ - न - ति | अन् - ति | अन्ती |
| / न्क / | सि - न - का | सिन् - का | सिन्का |
| / न्च / | सि - न - चा | सिन् - चा | सिउँदो |
| / न्छ / | ता - न - छा | तान् - छा | दरो, जिद्दी |
| / न्ज / | ब - नि - जा - ल | बन् - जाः | व्यापारी |
| / न्स / | पि - नि - सं | पिन् - सं | हरूले (ब.व.-सक-क) |
| / स्त / | क - स - ति | कस् - ति | मह |

| संयुक्त वर्ण | पूर्व रूप | आधुनिक रूप | अर्थ |
|---|---|---|---|
| / स्क / | बि - सि - का- व | बिस्का: | बिस्केट |
| / स्च / | कि - सि - चा | किस् - चा | छावा |
| / स्म / | स-र-स्व-ति-मा-जु | सस् - मा - जु | सरस्वती माता |
| / स्न / | अ - स - नस | अस् - नय् | असनमा (अघि) |
| / स्ल / | कि - स - लि-ख | किस् - ली | पूर्णपात्र |
| / र्प / | मा - रि - पा | मार् - पा | मालपुवा |
| / र्क / | प - त - का | पर् - का | टालो |
| / र्च / | बा - ता - चा | बार् - चा | बटुको |
| / र्ग / | अ - र - ग - ल | अर् - ग: | ईंटा भट्टा |
| / ल्प / | सु - ल - प्या | सुल् - प्या | जुका |
| / ल्त / | म - ल - भ - ता | मल् - ता | खुर्सानी |
| / ल्क / | य - ल - क्रस | यल् - क्रय् | सिंहाल (अघि) |
| / ल्च / | पा - लु - चा | पाल् - चा | पाला |
| / ल्प / | कु - लि - फि | कुल् - फि | भाले चराको पुच्छरमा उम्रने घुंघरिलो प्वाँख |
| / ल्ख / | आ-पु-लु-ख-न | आ - पुल्- खं | अपर्झट (क्रि.वि.) |
| / ल्म / | धाये-लि-म-य | धायल् - मय् | तुरुन्तै (क्रि.वि.) इ. |

## १.२.२.३ शब्दको अन्तमा संयुक्त व्यञ्जन

अन्तमा संयुक्त-व्यञ्जन आउने नेपालभाषाका आफ्नै शब्द छैन, केही आगन्तुक शब्दहरू मात्र छन् जो पढेलेखेकाहरूले बोलिचालीमा प्रयोग गर्दछन्, जस्तै -

| | |
|---|---|
| / - ञ्च् / | इन्च्, बेञ्च्, फ्रेञ्च् |
| / - ण्ट् / | रेण्ट् बहाल, फेण्ट् मूर्छा पर्नु |
| / - ञ्ज् / | बीरगञ्ज् शहर |
| / - न्द् / | बन्द् |
| /- ण्ड् / | खण्ड् भाग इ |

## १.३ अक्षर

व्यञ्जन भएको वा नभएको स्वर अक्षर हो। पलभरको एकै झट्कामा बोलिने उच्चारणको एकाइ अक्षर हो। अक्षरको निर्माणमा स्वरको ठूलो भूमिका हुन्छ। व्यञ्जनको बद्धावस्थालाई यसले अभिव्यक्तिको निकासा दिन्छ। उदाहरणको

लागि नेपालभाषाको / सिन्का / **बाँसको मसिनो छेस्को**लाई लिउँ । यसमा दुई अक्षर छन् - तीन वर्णको **सिन्** (स् - इ - न्) र दुई **वर्णको का** (क् - आ) । पहिलो अक्षरमा बीचको स्वर **इ**-ले दुवैतिरको व्यञ्जन **स्** र **न्**-लाई, त्यस्तै दोस्रो अक्षरको दोस्रो स्वर-वर्ण **आ**-ले अगिल्लो व्यञ्जन वर्ण **क्**-लाई मुक्त गरेका छन् । भाषाविज्ञानमा तीन वर्णको बद्धाक्षरमा बीचको स्वरलाई **न्यूल्किअस्** (nucleus), त्यस अगिको व्यञ्जनलाई **अनसेट्** (onset) र त्यस पछिको व्यञ्जनलाई **कोडा** (coda) भनिन्छन् -

| **अक्षर - १** | | | **अक्षर - २** | |
|---|---|---|---|---|
| अनसेट् | न्यूल्किअस् | कोडा | अनसेट् | न्यूल्किअस् |
| स् - | इ | - न् | क् | आ |
| | ↓ = सिन् - | | ↓ = का | |

## १.३.१ अक्षर-संरचना

नेपालभाषाका अक्षर-संरचना यस प्रकारका छन् -

| **वर्ण-क्रम** | **उदाहरण** | **अर्थ** |
|---|---|---|
| स्वर (V[५]) | / अँ: = अं / | आँप |
| | / ईं / | हँसिया |
| स्वर - व्यञ्जन (VC[६]) | / अङ् - गू / | औंठी |
| | / अप् - पा / | इँट |
| स्वर - स्वर (VV) | / आउँ / | रगतमासी |
| | / उइँ / | बहुलाही |
| व्यञ्जन - स्वर (CV) | / का / | धागो |
| | / चु / | बीँड |
| व्यञ्जन - स्वर - व्यञ्जन (CVC) | / धुक् - ति / | भंडार |
| व्यञ्जन - स्वर - स्वर (CVV) | / खइ / | खकार |
| | / लइँ / | मुला |
| व्यञ्जन - व्यञ्जन - स्वर (VVC) | / झ्या: / | झ्याल |
| | / ल्या - से / | तरुनी |

| वर्ण-क्रम | उदाहरण | अर्थ |
|---|---|---|
| व्यञ्जन-व्यञ्जन-स्वर-व्यञ्जन (CCVC) | / ध्वम् - प्वा:/ | जुठ्यान |
| | / प्यम् - पा / | फिला |
| व्यञ्जन-व्यञ्जन-स्वर-स्वर (CCVV) | / ख्वाँय्ँ/ | बहिरो |
| | / त्वाय् / | मीत |
| | / ह्याउँ / | रातो |
| | / ख्वाउँ / | चिसो |

# २. सन्धि र समास

व्याकरणमा दुई वर्णको संयोगलाई **सन्धि** वा **समास** भनिन्छ । दुई वर्णको संयोग हुँदा केही गुमेको छ भने त्यो समास हुन्छ, केही गुमेको छैन भने त्यो सन्धि हुन्छ । समासमा संयोग खास शब्दहरूको हुन्छ, सन्धि खास शब्दको मात्र हुनु पर्छ भन्ने छैन, कुनै दुई रूपको पनि हुन सक्छ । त्यसैले सन्धिलाई **रूप-सन्धि** पनि भनिन्छ । त्यसरी सन्धि हुँदा ध्वनिमा परिवर्तन आउने हुन्छ र त्यस किसिमको परिवर्तनलाई **रूप-सन्धि परिवर्तन** भनिन्छ ।

## २.१ नेपालभाषामा प्रचलित संस्कृतका सन्धिहरू

संस्कृतमा सन्धिबाट बनेका थुप्रै यौगिक शब्दहरू छन्, जुन नेपालभाषामा पनि आगन्तुक तत्सम रूपमा प्रयोग हुन्छन् । ती यौगिक शब्दहरू स्वर-सन्धि, व्यञ्जन-सन्धि र विसर्ग-सन्धिबाट बनेका हुन् (शास्त्री १९८५:१६-३५), जस्तो -

### (क) स्वर-सन्धि

अघिल्लो पदको अन्तिम स्वर र दोस्रो पदको अगिल्लो स्वरको जुन सन्धि हुन्छ - दुवै स्वरको संगम हुँदा त्यसलाई स्वर-सन्धि भनिन्छ । संस्कृतमा **आ** स्वरलाई **अ** स्वरको दीर्घरूप मानिन्छ । ह्रस्व दीर्घ जेसुकै भए पनि उही स्वरको द्वित्व भई जुन सन्धि हुन्छ, ती दुवै एकाकार भई एउटै तर दीर्घ लेख्ने चलन अनुरूप / - अ + आ - / को पनि / आ / नै हुन्छ, / - आ + आ - / को पनि / आ / नै हुन्छ, जस्तै -

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| हिम | + | आलय | = | हिमालय | (अ | + | आ | = | आ) |
| विद्या | + | आलय | = | विद्यालय | (आ | + | आ | = | आ) |

**(अ) द्विस्वर-सन्धि (अइ = ऐ, अउ = औ)**

ऐ, औ देवनागरी लिपिमा एउटै अक्षरले लेखिन्छन् तापनि तिनीहरू स्वर नभई **अइ** र **अउ** द्विस्वर हुन् । रोमन लिपिमा लेख्दा अनिवार्य रूपमा **ai, au** नै लेख्नु पर्दछ । संस्कृतमा यिनीहरूको सन्धिमा **अइ (ऐ)** को **ए** र **अउ (औ)** को **ओ** हुन्छ, जस्तै -

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| देव | + | इन्द्र | = | देवेन्द्र | (अ | + | इ | = | ए) |
| हित | + | उपदेश | = | हितोपदेश | (अ | + | उ | = | ओ) इ. |

**(आ) स्वरहरूको समानान्तर अर्धस्वरहरूमा (इ > य,उ > व)**

तालव्य स्वर **इ** अनुरूपको अर्धस्वर **य्** हो । पूर्वपदान्त **इ**-को पछिल्लो पदको आदिस्वरसित सन्धि हुँदा उक्त स्वर **इ** अर्धस्वर **य्**-मा परिणत हुन्छ, जस्तै -

| | |
|---|---|
| यदि + अपि = यद्यपि | (इ + अ = य) |
| इति + आदि = इत्यादि | (इ + आ = या) |
| प्रति + एक = प्रत्येक | (इ + ए = ये) |

ओष्ठ्य स्वर **उ** अनुरूपको अर्धस्वर **व** हो । पूर्वपदान्त **उ**-को पछिल्लो पदको अगिल्लो स्वरसित सन्धि हुँदा उक्त स्वर **उ** अर्धस्वर **व्**-मा परिणत हुन्छ, जस्तो -

| | | |
|---|---|---|
| अनु + अय | = अन्वय | (उ + अ = व) |
| सु + आगत | = स्वागत | (उ + आ = वा) |
| अनु + एषण | = अन्वेषण | (उ + ए = वे) |

नेपालभाषामा यसको विपरीत अर्धस्वरहरू **य्, व्** समानान्तर स्वरहरू क्रमशः **इ, उ**-मा परिणत हुन्छन् (हेर्नुहोस् २.२.१.२) अर्धस्वरहरूको समानान्तर स्वरहरूमा आदेश) ।

**(ख) व्यञ्जन-सन्धि**

सन्धि स्थलको सङ्केत गर्न यहाँ संक्षिप्तताको लागि .. **को** र .. **सित** लेखिएको छ । .. **को**-ले पूर्वपदान्त र .. **सित**ले उत्तरपदको आदिवर्णलाई बुझाएको भनी बुझ्नुपर्दछ ।

(अ) **सघोषीकरण**

-...**क्**-को घोष स्पर्श तथा स्वरवर्णसित सन्धि भएमा उक्त अघोष **क्** सघोष **ग्**-मा परिणत हुन्छ, जस्तै -

| | | | | | |
|---|---|---|---|---|---|
| दिक् | + | गज | = | दिग्गज | |
| वाक् | + | दान | = | वाग्दान | |
| वाक् | + | ईश्वर | = | वागीश्वर | इ. |

-त् वर्णको स्वर-वर्णसित सन्धि भएमा उक्त **-त्, द्**-मा परिणत हुन्छ, जस्तो -

जगत् + ईश > जगदीश      सत् + आचार > सदाचार

**(आ) / च् / को आगमन**

**छ**-सित स्वरवर्णको सन्धि भएमा उक्त **छ**-अगि **च** आगम हुन्छ, जस्तै -

परि + छेद = परिच्छेद

**(इ) परसमीभवन**

**त**-को **च**-वर्गसित सन्धि हुँदा परसमीभवन भई सो **त, च**-वर्गको अक्षरसित द्वित्व हुन जान्छ, जस्तै -

उत् + चारण = उच्चारण
सत् + चित् + आनन्द = सच्चिदानन्द
उत् + ज्वल = उज्ज्वल      इ.

**(ग) विसर्ग-सन्धि**

**(अ) विसर्गको ठाउँमा ष् आदेश**

विसर्ग युक्त **इ, उ**-कारको **क, प, फ**-सित सन्धि भएमा विसर्गको ठाउँमा **ष्** आदेश हुन्छ, जस्तै -

निः + कपट = निष्कपट
निः + फल = निष्फल
दुः + कपट = दुष्कपट      इ.

**(आ) विसर्गको ठाउँमा श-को आदेश**

विसर्गयुक्त **इ**-कारको अघोष तालव्य **वर्ण च, छ-**सित सन्धि भएमा विसर्गको ठाउँमा **श**-आदेश हुन्छ, जस्तै -

नि: + चल = निश्चल
नि: + छल = निश्छल इ.

**(इ) विसर्गको ठाउँमा ओ-को आदेश**

विसर्गयुक्त अकारको सघोष-वर्णसित सन्धि भएमा विसर्गको ठाउँमा **ओ** आदेश हुन्छ, जस्तै -

मन: + गत = मनोगत
मन: + भाव = मनोभाव
मन: + रथ = मनोरथ
मन + रञ्जन = मनोरञ्जन
मन: + नीत = मनोनीत इ.

**(ई) लुप्त रेफको पुनरागमन**

नि: को पूर्वरूप **निर्** हो भने त्यसको अरू वर्णसित सन्धि हुँदा विसर्गको ठाउँमा लुप्त रेफ् स्वत: आउँछ, जस्तै -

नि: (- र्) + गुण = निर्गुण
नि: (- र्) + जल = निर्जल
नि (- र्) + बल = निर्बल इ.

यहाँ नेपालभाषामा पनि प्रयोग हुने केही यौगिक शब्दहरूको मात्र संस्कृतका नियमानुसार भएको सन्धिहरू बारे चर्चा गरिएको छ । संस्कृतको सन्धिका नियमहरू अझ अरू विस्तृत र व्यापक छन् । नेपालभाषामा यस किसिमका खास गरी नामको नामसित हुने सन्धिहरू त छैनन्, तापनि आफ्नै ढंगका रूप-सन्धिहरू छन् । यहाँ नेपालभाषामा भएका रूप-सन्धिहरू बारे चर्चा गरिनेछ ।

## २.२ नेपालभाषामा रूप-सन्धि

नेपालभाषाका सबभन्दा पहिलो वैय्याकरण शहीद श्री शुक्रराज शास्त्रीले (१९८५:१६) आफ्नो **नेपालभाषा व्याकरणमा** *नेपालभाषा व्याकरणे सन्धिया व्यवहार मजू ...* (नेपालभाषाको व्याकरणमा सन्धिको व्यवहार हुन्न) भनी लेख्नु भएकोले हुन सक्छ उहाँ पछिका वैय्याकरणहरूले सन्धि विषयमा केही लेखेका छैनन् । संस्कृतमा जस्तो विस्तृत रूपमा नेपालभाषामा सन्धि देखिन्न तापनि आफ्नो स्वभावका केही रूप-सन्धिहरू छन् र त्यस बारे यहाँ चर्चा गरिनेछ ।

### २.२.१ स्वर-सन्धि

#### २.२.१.१ इ + इ = ई

दुई उही स्वर-वर्णको सन्धि हुँदा एकाकार भई एउटै तर दीर्घ हुने नियम अनुसारको सन्धि नेपालभाषामा कारक-रूपायनको अधिकरण रूप, र १० ले गुणन गरी आउने ईकारान्त संयुक्त संख्याको अक्षेरेपीमा आउँछन्, जस्तो -

**कारक-रूपायनको अधिकरण-रूप**

अधिकरण कारकमा इ / उकारान्त निर्जीव संज्ञाले **इ** प्रत्यय लिन्छ । पदान्त - **इ** र प्रत्यय **इ**-को सन्धि हुँदा उही उही स्वर एकाकार भई एउटै, तर दीर्घ रूपको हुन जान्छ, जस्तै -

| अर्थ | मूल | अधि. | अन्तिम रूप | |
|---|---|---|---|---|
| नदि | खुसि | - इ | खुसी | |
| रूखकटहर | फंसि | - इ | फंसी | |
| कांक्रो | तुसि | - इ | तुसी | इ. |

तर अचेल नेपालभाषामा सन्धि नै छैन्न भन्ने भ्रममा परी नयाँ पिंढीका कतिपय लेखकहरूले र प्रचलित अखवारहरूले व्यवहारिक बोली विरुद्ध (बोल्दा व्यवहारमा सन्धि भए पनि) लेख्दा सन्धि नगरी यसरी लेख्छन् - खुसिइ, फंसिइ, तुसिइ इ. ।

बोली विरुद्ध यसरी लेख्ने गरेको धेरै भएको छैन, हालै मात्र हो । यसअघि नेपालभाषाका प्रसिद्ध लेखकहरू महाकवि चित्तधर 'हृदय', कविवर सिद्धिचरण श्रेष्ठ, वैय्याकरण शुक्रराज 'शास्त्री', समालोचक रत्नध्वज जोशी आदि सबैजसोले

बोली अनुसार सन्धि गरी **खुसिको** अधिकरण रूप **खुसी** (नदीमा), **तुफिको** अधिकरण रूप **तुफी** (कुच्चोमा) नै लेख्नुहुन्थ्यो र अहिले पनि धेरै लेखकहरू सन्धि गरेरै लेख्दछन् तापनि नयाँ पिंढिका धेरैले सन्धि नगरीकन पनि लेख्न थालेका छन्, जसमा कृत्रिमताको आभास पाइन्छ, सन्धिको दृष्टिले जो नमिल्दो पनि छ ।

कारक-रूपायनको अधिकरण बाहेक सन्धिको यो रूप १० अंकले गुणन गरी आउने ईकारान्त संयुक्त संख्याको अक्षेरेपीमा पनि छ, जस्तो -

| **मूल रूप** | **गुणक (Mulitplier)** | **गुणन्फल** |
|---|---|---|
| २ | १० | २ × १० = २० |
| नि | इ | नि × इ = नी |

यस अवस्थामा भने **निइ नलेखी** सबैजसोले सन्धि गरी **नी** (२०) नै लेख्दछन् । सन्धि गरी लेख्नु पर्नेमा नगरी **खुसी** (नदी) को अधिकरण रूप **खुसिइ** लेख्नेहरूले क्रियाको पराभूत (पर + अभूत) रूपमा पनि कारकको उपरोक्त अधिकरण रूपकै अन्धानुकरण गरी ठूलो भूल गरेको देखिन्छ । **खुसि** (नदी) को अधिकरण रूप **खुसिइ** लेखे जस्तै **वन्** - (जान् -) धातुको पराभूत रूप **वन् - ई = वनी** लेख्नु पर्नेमा **वनिइ** जो लेखिन्छ त्यसले क्रियाको पराभूत रूपमा कारकमा अधिकरण रूपको अन्धानुकरण गरेका मात्र नभई क्रियाको मूल रूप धातुकै पहिचानमा पनि गल्ति गरेको ठहरिन्छ ।

## २.२.१.२ अर्धस्वरहरूको समानान्तर स्वरहरूमा आदेश

**(क) व > उ / अ**

दूरदर्शक सर्वनाम **व**, समीपदर्शक सर्वनाम **थ्व** र प्रश्नवाचक सर्वनाम **ग्व**-को रीतिवाचक क्रिया-**विशेषण / कथं / सित** सन्धि हुँदा **व**-को **उ**-मा, र त्यस्तै तुल्यबोधक **थे / ज्याः** र क्रिया-विशेषणको स्थानवाचक रूपको व्युत्पादक प्रत्यय **न**-सित सन्धि हुँदा सो **व**-को **अ, थ्व-को थ** र **ग्व**-को **ग**-मा आदेश हुन्छ, जस्तै -

| अर्थ | मूल | आदेश | क्रि. वि. | अन्तिम रूप |
|---|---|---|---|---|
| त्यो | व | उ | कथं | उकथं |
| यो | थ्व | थु | कथं | थुकथं |
| खोइ, को / के | ग्व | गु | कथं | गुकथं ? |
| त्यसरी / त्यस्तो | व | अ | थे / ज्या:गु / म्ह | अथे/ अज्यागु / म्ह |
| यसरी / यस्तो | थ्व | थ | थे / ज्या:गु / म्ह | थथे |
| कसरी / कस्तो | थ्व | ग | थे / ज्या:गु / म्ह | गथे /गज्यागु / म्ह |

| अर्थ | मूल | आदेश | क्रि. वि. को व्यु. प्र | अन्तिम रूप |
|---|---|---|---|---|
| त्यहाँ | व | अ | न | अन |
| यहाँ | थ्व | थ | न | थन |
| कहाँ | ग्व ? | ग | न | गन ? |

**(ख) -य > इ**

बीचमा परेको छँदो अर्ध स्वर **य** तदनुरूपको स्वर **इ**-मा वैकल्पिक रूपमा बदल्न सक्छ, जस्तो -

| अर्थ | मूल | आगम[१] | आदेश[१] | विभक्ति | अन्तिम रूप |
|---|---|---|---|---|---|
| को ? | सु ? | -या > | इ | - त | सुयात / सुइत |

## २.२.२ व्यञ्जन-सन्धि

सन्धि हुने दुई वर्णहरू मध्ये कुनै एक व्यञ्जन भए व्यञ्जन-सन्धि हुन्छ ।

### २.२.२.१ लुप्ताक्षरको पुनरागमन

कारकको **सकर्मक कर्ता, करण, अपादान** र **अधिकरण** रूपमा नेपालभाषाको एकाक्षरी प्रवृत्तिले गर्दा मूल रूपबाट लोप भइसकेका अन्तिम अक्षरहरू कारक-रूपायनमा विभक्ति जोडिनु अगाडि रूप-सन्धिकै कारण फेरि जोडिन आउँछन्, जस्तै -

| अर्थ | मूल | सक-क-अ | अधि |
|---|---|---|---|
| मानिस | मनू (-ख) | मनुखं | मनुखय् |
| फूल | स्वां (-न) | स्वानं | स्वानय् |
| पुस्तक | सफू (-लि/ति) | सफुलिं / तिं | सफुली/ती |

### २.२.२.२ कारक-रूपायनमा मूल रूपको आगमहरूसित रूप-सन्धि

शब्दको मूल रूपमा प्रत्यय जोडिनुअगि उच्चारण गर्न सजिलो होस् भन्ने हिसाबले कतै ऐच्छिक र कतै अनिवार्य रूपमा जोडिन आउने तत्वलाई **आगम** भनिन्छ । यस्ता आगमहरू कतै एक्लै र कतै दुई वा दुईभन्दा बढी जोडिएर आउँछन् । नेपालभाषाको कारक रूपायनमा यस्ता आगमहरूको प्रयोग हुन्छ ।

नेपालभाषामा गुणबोधक विशेषणले सम्बन्धित संज्ञाको गुण जाहेर गर्दा सम्बन्धित संज्ञा सजीव भए संयोजक रूपमा **म्ह** र निर्जीव भए **गु** सम्बन्धित विशेषणसित जोडिएर आउँछन् । यिनै **म्ह** संयोजकसित आगम **या**-सित रूपसन्धि हुँदा **म्ह**-को महाप्राण लोप भई **म** मात्र बाँकी रहन्छ भने आगम **या** **य्**-मा परिणत हुन्छ, जस्तो -

| अर्थ | मूल | सं | आगम | विभक्ति | अन्तिम रूप | कारक |
|---|---|---|---|---|---|---|
| राम्रो | बांला: | म्ह | यासिन | ० | बालां:मय्सिनं | सक-क. |
| /राम्री | | | यासिया | ० | बांला:मय्स्यां | |
| | | | यासि | त | बांला:मय्सित | कर्म/सम्प्र. |
| | | | यासि | ø | बांला:मय्सिगु/म्ह | सम्. |
| | | | यासि | के | बांला:मय्सिके | अधि. |

### २.२.२.३ विकल्पमा स्वर-वर्ण लोप हुने

मूल शब्दको आकारान्त रूपको अन्तिम **-आ** बहुवचन प्रत्यय **त**-सित सन्धि हुँदा विकल्पले लोप हुन्छ, जस्तै -

| मूल | ब.व. | अन्तिम रूप | अर्थ |
|---|---|---|---|
| मचा | - त | मस्त / मचात | बच्चाहरू |
| मिसा | - त | मिस्त / मिसात | महिलाहरू |

माथिको पहिलो उदाहरणमा विकल्पमा **-च, स**-मा आदेश भएको कुरा उल्लेखनीय छ।

### २.२.२.४ अदलाबदली (विपर्यास)

कतै कतै नेपालभाषामा सन्धिकै कारण पनि वर्णको अदलाबदली हुनसक्छ। क्रियाको आत्म-भूत रूपपछिको समय बुझाउने क्रिया-विशेषण **कथनं** (बित्तिकै) सित सन्धि हुँदा **कथनं** विकल्पले **खतनं** पनि हुनसक्छ जहाँ **क** र **थ**-मा महाप्राणको अदलीबदली हुन गएको छ, जस्तै -

| | | | |
|---|---|---|---|
| धया + कथनं = | धया / इ | कथनं /खतनं | व वन |
| | (भन्ने | बित्तिकै | उ गयो) |

दर्शक सर्वनाम **व, थ्व**, प्रश्नवाचक सर्वनाम **ग्व** र विविध क्रियारूपको रीति बुझाउने क्रिया-विशेषण **कथं**सित सन्धि हुँदा पनि **क** र **थ**-मा महाप्राणको हेरफेर भई विकल्पले **कथं**को **खतं** पनि हुनसक्छ, जस्तै -

| **मूल** | **क्रिया-रूप** | **क्रि.वि.** | **अन्तिम रूप** | **अर्थ** |
|---|---|---|---|---|
| व | | कथं ~ खतं | उकथं ~ उखतं | त्यसरी |
| थ्व | | कथं ~ खतं | थुकथं ~ थुखतं | त्यसरी |
| ग्व | | कथं ~ खतं | गुकथं ~ गुखतं | कसरी |
| धया | आ.भू. | कथं ~ खतं | धइकथं ~ धइखतं | भने बमोजिम |
| धाये>धाय् | आ.अ. | कथं ~ खतं | धाय्कथं ~धाय्खतं | भने बमोजिम |
| धाइ | प.अ. | कथं ~ खतं | धाइकथं ~ धाइखतं | भने बमोजिम |
| धा: | स्व/स्थि. | कथं ~ खतं | धा:कथं ~ धा:खतं | भने बमोजिम |

**उकुन्हु > उखुनु**

पूर्वरूप **उकुन्हु**बाट वर्तमान रूप **उखुनु**मा निम्नासुसार सन्धि भई अदलाबदलीकै प्रक्रियाबाट ध्वनिपरिवर्तन भएको छ -

| **दूर सर्व** | **किटा** | **संज्ञा** | **यौगिक शब्द** |
|---|---|---|---|
| व | कु | न्हु | उखुनु |
| (त्यो | स | दिन | त्यसदिन) |

यहाँ **कु**-सित सन्धि हुँदा अर्धस्वर **व** तदनुरूपको स्वर उ-मा बदलेको छ,

**कु**-को **न्हु**-सित सन्धि हुँदा महाप्राण **ह**-को अदलाबदली भई **कु**, **खु**-मा र त्यस्तै **न्हु**, **नु**-मा परिणत भएको छ ।

## २.३ समास

दुई वा दुई भन्दा बढी शब्दहरू केही गुमाई एक हुने प्रक्रियालाई **समास**, र त्यसरी समास भएको शब्दलाई **समस्त शब्द** भनिन्छ । समस्त शब्दमा कतै अगिल्लो, कतै पछिल्लो र कतै दुवै शब्दको अर्थ प्रधान हुन्छ । शब्दार्थको प्रधानतालाई विचार गर्दा नेपालभाषाका समस्त पदहरूलाई निम्नानुसार विश्लेषण गर्न सकिन्छ -




### २.३.१ तत्पुरुष

यसमा अगिल्लो पदको विभक्ति (कारक-प्रत्यय) लोप भई दुई शब्दको संयोग हुन्छ । यसमा लोप भएको विभक्तिको नामबाट तत्पुरुष समासको नामकरण गरिएको हुन्छ, जस्तै -

| अगिल्लो पद | पछिल्लो पद | लुप्त अंश | समस्त पद | समास |
|---|---|---|---|---|
| मचा(या)त | बुइम्ह | - (या) त | मचाबुइम्ह | द्वि. त. |
| (बच्चालाई | बोक्ने | लाई | बच्चाबोक्ने | द्वि. त) |
| मिखां | कां | ० | मिखाकां | तृ. त. |
| (आँखाले | अन्धो | - ले | आँखान्धो | तृ . त.) |
| द्यो(या)त | ब्वं | - (या) त | द्योब्व | च. त. |
| (देवतालाई | भाग | - लाई | देवभाग | च. त.) |
| नुगलं | क्वय् | ० | नुग:क्वय | प. त. |
| (सुन्धारादेखि | तल | - देखि | सुन्धारातल | प. त.) |

| अगिल्लो पद | पछिल्लो पद | लुप्त अंश | समस्त पद | समास |
|---|---|---|---|---|
| कुमारीया | छेँ | - या | कुमारीछेँ | ष. त. |
| (कुमारीको | घर | - को | कुमारीघर | ष. त.) |
| गा:बहालय् | जात्रा | - य् | गा:बहाजात्रा | स. त. |
| (गा:बहालमा | जात्रा | - मा | गा:बहालजात्रा | स. त) |

## २.३.२ कर्मधारय

बिशेषण र संज्ञाको संयोगलाई कर्मधारय भनिन्छ । कर्मधारय समासमा पछिल्लो संज्ञा शब्द सजीव भए **-म्ह** र निर्जीव भए - **गु** बिग्रह हुँदा संयोजक रूपमा प्रयोग हुन्छ, तर समास हुँदा सो लोप हुन्छ, जस्तै -

| वि. | सं | संज्ञा | समस्तशब्द | अर्थ |
|---|---|---|---|---|
| ह्याउँ | - म्ह | मचा | ह्याउँमचा | शिशु |
| पाउँ | - गु | घाँय् | पाउँघाँय् | चरि अमिलो |

## २.३.३ द्विगु

संख्यावाचक शब्दको अर्को संख्यावाचक वा संज्ञा शब्दसित हुने संयोगलाई द्विगु समास भनिन्छ, जस्तै -

| संख्या. | कोटि | संख्या. /संज्ञा | समस्त-शब्द | |
|---|---|---|---|---|
| नि | गू / थी | सच्छि | निस: | |
| (दुई | | सय् | दुइसय) | |
| खु | गू | कोस | खुकोय्[११] | |
| (छ | | कोस | छकोस) | इ. |

## २.३.४ बहुव्रीहि

दुई वा दुईभन्दा बढी पदहरू मिली आंगिक पदहरूदेखि भिन्न अर्को संज्ञाको गुण जाहेर गर्ने विशेषण-रूपलाई बहुव्रीहि समास भनिन्छ । अरू समासमा प्रत्यय चिन्ह वा व्याकरणिक रूप मात्र गुमेको हुन्छ । तर बहुव्रीहि समासमा आवश्यकतानुसार पद नै लोप भएको हुन्छ । यसरी लोप हुने शब्द प्राय: वाक्यांशको बीच भागको हुने हुँदा यस समासलाई कसैकसैले **मध्यपदलोपेसमास** पनि भन्ने गरेका छन्, जस्तै -

| **समस्त शब्द** | | **अर्थ** |
|---|---|---|
| *खिचा तुति, माकःपालि जिम्ह्याय् लछिमि* | | |
| खिचाया थें जा:गु तुति दुम्ह | > | खिचातुति |
| (कुकुरको जस्तो खुट्टा भएकी | > | कुकुरखुट्टे) |
| माक:या थें जा:गु पालि दुम्ह | > | माक:पालि |
| (बाँदरको जस्तो पाइला भएकी | > | बाँदरे पाइला) |

यी दुवै उदाहरणमा बीचका तुल्ययोगी **थेजा:गु** र अन्तमा गुणबोधक रूप **दुम्ह** लोप भएको छ । समस्त शब्द **खिचातुति** र **माकःपालिले जि म्ह्याय् लछिमि** (मेरी छोरी लक्ष्मी) भनीकन कुकुरको जस्तो खुट्टा र बाँदरको जस्तो पाइला भएकी लक्ष्मी नाम गरेकी छोरीको रूप वर्णन गरिएको छ । उपरोक्त पंक्ति नेपालभाषाको लोकगीतबाट उद्धरण गरिएको हो । त्यस्तै अरू केही उदाहरणहरू -

| | | | | | |
|---|---|---|---|---|---|
| कवंया | थें जा:गु | ख्वा:म्ह | > | कवंख्वा: | |
| (कंकालको | जस्तो - | रूपभएकी | > | ख्याउटी) | |
| सूर्यया | थें जा:गु | ख्वा:म्ह | > | सूर्यमुखी | |
| (सूर्यको | जस्तो | मुखभएकी | > | सूर्यमुखी) | |
| फसं | न्याइगु | गं | > | फय्गं | |
| (हावाले | बज्ने | घण्टी | > | वकम्फुसे) | इ. |

## २.३.५ अव्ययीभाव

अव्ययको अर्को अव्ययसित वा अरू शब्दसित भएको समासलाई अव्ययीभाव समास भनिन्छ । यसमा अगिल्लो होस् वा पछिल्लो, अव्ययकै अर्थ प्रधान हुन्छ । अव्ययको अरू शब्दसित समास हुँदा नेपालभाषामा अव्यय प्राय: पछि रहेको हुन्छ, जस्तै -

| | | | | |
|---|---|---|---|---|
| गथे | धाल | अथे | > | धा: थे |
| (जस्तो | भन्यो | उस्तो | > | भनेजस्तो) |
| गथे | गथे | धाल अथे अथे | > | धा: धा: थे |
| (जस्तो | जस्तो | भन्यो उस्तै उस्तै | > | भने भनेजस्तो) |
| थौं | व | कनय् | > | थौंकनय् |
| (आज | र | भोलि | > | आजभोलि) |

| | | | | | |
|---|---|---|---|---|---|
| उखे | व | थुखे | > | उखेथुखे[१२] | |
| (उता | र | यता | > | यताउति | |
| च्वय् | व | च्वय् | > | च्वय्च्वय् | |
| (माथि | र | माथि | > | माथिमाथि) | इ. |

### २.३.६ द्वन्द्व

संयोजक / व / र लोप गरी गरिएको समासलाई द्वन्द्व समास भनिन्छ। द्वन्द्व समासमा दुबै शब्दको अर्थ प्रधान हुन्छ। द्वन्द्व समासलाई समानार्थक र विपरीतार्थक गरी दुई भागमा विभाजन गर्न सकिन्छ -

**(क) समानार्थक**

| | | | | | |
|---|---|---|---|---|---|
| हेरा | व | मोति | > | हेरामोति | |
| (हीरा | र | मोती | > | हीरामोती) | |
| ला | व | लुसि | > | लालुसि[१३] | |
| (मासु | र | नङ | > | नङमासु) | |
| माय् | व | मू | > | मायमू | |
| (मास | र | मूगी | > | माससुंगी) | |
| घ्य: | व | चाकु | > | घ्य:चाकु | |
| (घिउ | र | चाकु | > | घ्यूचाकू) | इ. |

**(ख) विपरीतार्थक**

| | | | | | |
|---|---|---|---|---|---|
| ल: | व | मि | > | ल:मि[१४] | |
| (पानी | र | आगो | > | आगोपानी) | |
| च्वय् | व | क्वय् | > | च्वय्क्वय्[१५] | |
| (माथि | र | तल | > | तलमाथि) | |
| ज: | व | ख: | > | ज:ख: | |
| (दाँया | र | बायाँ | > | दायाँबायाँ) | |
| मिसा | व | मिजं | > | मिसामिजं | |
| (स्त्री | र | पुरुष | > | स्त्रीपुरुष) | इ. |

# ३. नामिक-शब्द

नाम, नामको सट्टामा आई नामले जस्तै काम गर्ने सर्वनाम र गुणबोधित संज्ञाको अनुपस्थितिमा संज्ञा भई काम गर्ने विशेषण **नामिक-शब्द** हुन् । यिनीहरूको वचन र कारकमा पनि रूप चल्छ ।

## ३.१ नाम

नामलाई संज्ञा पनि भनिन्छ । नाम वा संज्ञा एक मुख्य वाक्भाग हो जसले क्रियासित मिली वाक्य पूरा गर्छ । रूपायित भाषामा लिङ्ग, वचन र कारकमा जसको रूप चल्छ, जसलाई ठाउँ, व्यक्ति र वस्तुमा विभाजन गर्न सकिन्छ, त्यो नाम हो । रूप र अर्थको दृष्टिले नामलाई **सरल** र **व्युत्पादित** गरी दुई किसिममा विभाजन गर्न सकिन्छ ।

### ३.१.१ सरल नाम

जो आफैमा पूर्ण छ, जसले नामको रूप लिन कुनै प्रत्यय लिनु पर्दैन त्यो सरल नाम हो, जस्तै -

राम (पुरुष नाम), सीता (स्त्री नाम),
आलु (वस्तु नाम), नेपाल (देश नाम),
शक्ति (भाव नाम) इ.

### ३.१.२ व्युत्पादित नाम

मूल रूपमा प्रत्यय लगाई बनेका व्युत्पादित, सन्धि वा समास गरी बनेका यौगिक शब्दहरू यसमा पर्दछन् । नेपालभाषामा धेरैजसो धातुमा, धातु बाहेक अरू नाम र विशेषणमा पनि प्रत्यय लगाई नामको व्युत्पादन गरिन्छ, जस्तै -

### ३.१.२.१ धातुबाट नाम

**/ सा /**

| **क्रियार्थ** | **धातु** | **प्रत्यय** | **व्यु. नाम** | **अर्थ** | |
|---|---|---|---|---|---|
| ओढ्नु | कु - | सा | कुसा | छाता | |
| लाउनु | ति - | सा | तिसा | गहना | |
| देखाउनु | ब्व - | सा | ब्वसा | देखावा | |
| सुहाउनु | ल्व - | सा | ल्वसा | सितन | |
| जोड्नु | घा - | सा | घासा | सितन | |
| थाप्नु | पा - | सा | पासा | साथी | |
| निफन्नु | हा - | सा | हासा | नाङ्लो | |
| ओछ्याउनु | ला - | सा | लासा | ओछ्यान | इ. |

**/ साः /**

| | | | | | |
|---|---|---|---|---|---|
| हान्नु | क - | साः | कसाः | सासना | |
| रच्नु | ग्व- | साः | ग्वसाः | योजना | |
| घुम्नु | हिल् - | साः | हिसाः | पेचको घाट | इ. |

(**हिल्**-ले **सा** प्रत्यय लिनुअगि त्यसको अन्तिम **ल्** लोप भएको छ)

**/ पा /**

| | | | | | |
|---|---|---|---|---|---|
| भुल्नु | दा - | पा | दापा | सट्टापट्टा | |
| भिड्नु | ल्वा - | पा | ल्वापा | लोप्पा | |
| कोर्नु | कि - | पा | किपा | तस्वीर | |
| रंगाउनु | छि - | पा | छिपा | रञ्जितकार | इ |

**/ पाः /**

| | | | | |
|---|---|---|---|---|
| काट्नु | चा - | पाः | चापाः | कत्रन |
| रोकिनु | दि - | पा | दिपा | विश्राम |
| उमाल्नु | सु - | पाः | सुपाः | बाफिने मात्रा |

| क्रियार्थ | धातु | प्रत्यय | व्यु. नाम | अर्थ |
|---|---|---|---|---|
| / चः / | | | | |
| छेक्नु | कि - | चः | किचः | छाँया |
| पुछ्नु | पि - | चः | पिचः | चिप्रा |
| / च्वः / | | | | |
| तर्साउनु | ख्या- | च्वः | ख्याच्वः | चेतावनी |
| / पु / | | | | |
| खानु | न - | पु | नपु | खवाइ |
| लड्नु | ल्वा - | पु | ल्वापु | झगडा |
| जोड्नु | स्वा - | पु | स्वापु | गाँस |
| बफाउनु | हा - | पु | हापु | माम (तोतेबोली) |
| बाँकी | ल्यन् - | पु | ल्यंपुल्यं | रहलपहल इ. |

(ल्यन्‌ले पु प्रत्यय लिनुअगि त्यसको अन्तिम न् शिरबिन्दुमा बदली अगिल्लो स्वरमा चढेको छ)

| | | | | |
|---|---|---|---|---|
| / पू / | | | | |
| काट्नु | चा - | पू | चापू | कत्रन |
| नाप्नु | दा - | पू | दापू | नापो |
| भन्नु | धा - | पू | धापू | भनाइ |
| असल हुनु | भिन् - | पू | भिम्पू | मुगा |

(भिन्‌को अन्तिम न् ओष्ठ्यवर्ण पू-अगाडि परसमीभवन भई ओष्ठ्य नासिक्य म्-मा बदलिएको छ ।)

| | | | | |
|---|---|---|---|---|
| / पँः (=पं) / | | | | |
| भुल्नु | द्वन् - | पं | द्वपं | दोषारोपण |
| घाटा पर्नु | द्या - | पं | द्यापं | घाटा-हिस्सा |
| पुर्नु | ल्हा - | पं | ल्हापं | शुल्क |

(पं प्रत्यय लिनुअगि द्वन्‌को अन्तिम न् लोप भएको छ ।)

| क्रियार्थ | धातु | प्रत्यय | व्यु. नाम | अर्थ |
|---|---|---|---|---|
| **/ ब: /** | | | | |
| आकार दिनु | ज्या - | ब: | ज्याब: | ज्यावल |
| भिड्नु | ल्वा - | ब: | ल्वाब: | हतियार |
| **/ चा /** | | | | |
| खन्नु | खन् - | चा | खन्चा | खन्ती |
| ढाकनु | भुन् - | चा | भुन्चा / भ्वन्चा | मोलम्बा सुन गाल्ने ज्यावल |
| असल हुनु | भिन् - | चा | भिन्चा | भानीज इ. |
| **/ वा: /** | | | | |
| चर्नु | ज - | वा: | जवा: | गोठालो |
| हिड्नु | जु - | वा: | जुवा: | यात्री |
| पर्खनु | पि - | वा: | पिवा: | पाले |
| सुक्नु | सु - | वा: | सुवा: | भान्छे (थर) इ. |
| **/ खि /** | | | | |
| बाँध्नु | चि - | खि | चिखि | डोरो |
| पिट्नु | दा - | खि | दाखि | दामल |
| नाप्नु | दा - | खि | दाखि | डोरी (नाप्ने) |
| **/ सि /** | | | | |
| राख्नु | त - | सि | तसि | तख्ता |
| हुनु | द - | सि | दसि | प्रमाण |
| रोप्नु | पि - | सि | पिसि | अक्षतायोनि, किशोरीको योनि |
| कुट्नु (च्यूरा) | ल्हु - | सि | ल्हुसि/लुसि | मुग्रो |
| बफाउनु | हा - | सि | हासि | पींधमा प्वाल भएको माटोको भाँडो विशेष |

| क्रियार्थ | धातु | प्रत्यय | व्यु. नाम | अर्थ |
|---|---|---|---|---|
| / ला / | | | | |
| भिसाउनु | छ्या - | ला | छ्याला | पञ्चकोल |
| / ति / | | | | |
| सम्झनु | लुमन् - | ति | लुमन्ति | सम्झना |
| / बि / | | | | |
| रुनु | ख्व - | बि | ख्वबि | आँसु |
| / कू / | | | | |
| बिझ्नु | न्व - | कू | न्वकू | पचर |
| / लु / | | | | |
| रुनु | ख्व - | लु | ख्वलु | रुन्चे रोग |
| / स / | | | | |
| सपना देख्नु | म्हन् - | स | म्हंस | सपना |
| / - : / | | | | |
| थुन्नु | कुन् | : | ध्याकुँ: (=ध्याकुं) | कुना |
| रोक्नु | पन् - | : | क्व-पं: | ढकन |
| पर्खनु | लन् - | : | पा-लँ: (= लं) | फलाहार |

### ३.१.२.२ नामबाट नाम

| अर्थ | नाम | प्रत्यय | व्यु. नाम | अर्थ |
|---|---|---|---|---|
| / सू / | | | | |
| बालक | मचा | सू | मचासू | केटाकेटीपन |
| बहुलाहा | वँय् | सू | वँय्सू | बहुलाहापन |
| बहुलाही | उइँ | सू | उइँसू | बहुलाहीपन |

| अर्थ | नाम | प्रत्यय | व्यु. नाम | अर्थ |
|---|---|---|---|---|
| पट्ठो | ल्यायम्ह | सू | ल्यायम्हसू | पट्ठोपन |
| पट्ठी | ल्यासे | सू | ल्यासेसू | पट्ठीपन |

/ पु /

| | | | | |
|---|---|---|---|---|
| काम | ज्या | पु | ज्यापु | श्रमिक |
| गाई | सा | पु | सापु | ग्वाला |
| कुरा | खँ | पु | खँपु | शैली |

/ चा /

| | | | | | |
|---|---|---|---|---|---|
| कुकुर | खिचा | चा | खिचाचा | छाउरो | |
| गाई | सा | चा | साचा | बाछी | |
| साँढे | द्रहँ | चा | द्रहँचा | बाछो | |
| हात्ती | किसि | चा | किसिचा | छावा | |
| कुखुरा | खा | चा | खाचा | चल्ला | |
| छोरा | काय् | चा | काय्चा | भतिजो | |
| चाकु | चाकु | चा | चाकुचा | पुरुष नाउँ | |
| छोरी | म्ह्याय् | चा | म्ह्याय्चा | भतिजी | इ. |

/ मि /

| | | | | | |
|---|---|---|---|---|---|
| काम | ज्या | मि | ज्यामि | श्रमिक | |
| काठमाडौं | यें | मि | यमि | काठमाडौंको वासिन्दा | |
| पांगा (ठाउँ) | पांगा | मि | पांगामि | पांगाली | |
| कोल/साल | साल | मि | सालमि | मानन्धर, तेली | इ. |

/ सा /

| | | | | | |
|---|---|---|---|---|---|
| बियाँ | पु | सा | पुसा | बिउ | |
| आगो | मि | सा | मिसा | आइमाई | इ. |

/ आः / वः

| | | | | |
|---|---|---|---|---|
| गाउँ | गां(-म्) | आः/वः | गामाः/गाम्वः | गाउँले |

| अर्थ | मूलनाम | प्रत्यय | व्यु. नाम | अर्थ |
|---|---|---|---|---|
| / कू / | | | | |
| पराल | सु | कू | सुकू | सुकुल |
| / गू / | | | | |
| रौं | सँङ् | गू | सङ्गू | रौंको त्यान्द्रो |

(गू प्रत्यय लिनु अगि सँ संज्ञाले ङ आगम लिएको छ ।

| | | | | |
|---|---|---|---|---|
| / ता / | | | | |
| रस | लय् | ताः | लय्ताः | खुसियाली |
| / नू / | | | | |
| रगत | हि | नू | हिनू | धमनी |
| / या / | | | | |
| पसल | पसः (-ल) | या | पसल्या | पसले |
| डोली | दू (-लि) | या | दुल्या | डोले |

(या प्रत्यय लिनु अगि सम्बन्धित संज्ञाका अन्तिम स्वरहरू लोप भएका छन्)

| | | | | |
|---|---|---|---|---|
| / याः (-र) / | | | | |
| गुठी | गुथि | याः | गुथ्याः | गुठियार |

(याः प्रत्यय लिनुअगि गुथिको अन्तिम इ लोप भएको छ)

| | | | | |
|---|---|---|---|---|
| / ला / | | | | |
| काम | ज्या | ला | ज्याला | ज्याला |
| / लि / | | | | |
| घर | छें | लि | छेलि | छिंडी |

### ३.१.२.३ विशेषणबाट नाम

| अर्थ | विशेषण | प्रत्यय | व्यु. नाम | अर्थ |
|---|---|---|---|---|
| / चा / | | | | |
| कालो | हाकु | चा | हाकुचा | काले |
| सेतो | तुयु | चा | तुयुचा | गोरे |
| हरियो | वाउँ | चा | वाउँचा | साग |
| / सि / | | | | |
| तीतो | खायु | सि | खाइसि | कीप |
| गुलियो | चाकु | सि | चाकुसि | चाक्सी |

(**सि** प्रत्यय लिनुअगि **खायु**को उकारान्त तालव्य अर्धस्वर **य** तालव्य स्वर **इ**मा बदलिएको छ ।)

## ३.१.३ कार्यको आधारमा नामको विश्लेषण

मूल तथा व्युत्पादित नामहरूलाई कार्यको आधारमा तीन भागमा यसरी विश्लेषण गरिन्छ -

### ३.१.३.१ सामान्य नाम

जुन वस्तुको नाम लिइएको हो सो एउटा मात्र नभई त्यस जातको अरू धेरै अर्थ हुन सक्ने जातिवाचक संज्ञालाई **सामान्य नाम** भनिन्छ । नेपालभाषामा गन्न सक्ने र नसक्ने गरी दुई किसिमका सामान्य नाम छन्, जस्तै -

| गन्न नसक्ने | | गन्न सक्ने | |
|---|---|---|---|
| **नाम** | **अर्थ** | **नाम** | **अर्थ** |
| ल: | पानी | च्वसा | कलम |
| दुरु | दूध | सफू | पुस्तक |
| लुँ | सुन | खेँय् | फुल |
| वह | चाँदी | ग्वय् | सुपारी |
| छुचुं | पीठो इ. | लवं | ल्वाङ् इ. |

### ३.१.३.२ विशेष नाम

अद्वितीय व्यक्ति वा वस्तु जनाउने शब्द **विशेष नाम** हुन्छ । यस्ता नामहरू सजीव र निर्जीव गरी दुई किसिमका छन् -

| सजीव | | निर्जीव | |
|---|---|---|---|
| राम | दशरथको छोरा | कृष्णमन्दिर | पाटनको कृष्णमन्दिर |
| लक्ष्मण | रामको भाइ | | |
| सीता | रामकी स्त्री | महाबौद्धमन्दिर | पाटनको बौद्धमन्दिर |
| हनुमान | वायुपुत्र, रामायणको एक पात्र | काठमाडौं | नेपालको राजधानी |
| | | | इ. |

### ३.१.३.३ भाववाचक नाम

वस्तुवादी संज्ञा विपरीत भाववाचक नाम अभौतिक र आदर्श हुन्छ । छुन, देख्न, सुघ्न र सुन्न नसके पनि यसको अस्तित्त्वबोध भने हुन्छ, जस्तो - मतिना (प्रेम), घृणा, दया, माया, साहस इ.

**टिप्पणी**

तिब्बर्मी (Tibeto-Burman) परिवारका भाषाहरूको एउटा लक्षण के छ भने वस्तु जनाउने सामान्य नाममा यी भाषाहरू धनी छन् । यही परिवारको नेपालभाषामा पनि एउटै वस्तुलाई जनाउने नामहरू धेरै छन् । कमिलालाई जनाउने यस भाषामा तीन शब्द छन्, केराउ जनाउने ५ शब्द छन्, नारीजननेन्द्रिय बुझाउने ४ शब्द छन्, एउटै बस्तु जनाउन दुई दुई शब्द भएका नामहरू धेरै छन्, जस्तै -

**कमिला जनाउने शब्द**

| शब्द | अर्थ |
|---|---|
| सपानिचा | रातो कमिला |
| इमू | कमिला (सामान्य) |
| कुमिचा | धमिरा (सेतो) |

**केराउ जनाउने शब्द**

| **शब्द** | **अर्थ** |
|---|---|
| क:छे | कोसा |
| कय्गु | केराउ |
| क:सू | केराउको छाटा |
| कंघासा | केराउको अचार (पिनेको) |
| क:चु | केराउको साग |

**नारी-जननेन्द्रिय जनाउने शब्द**

| | |
|---|---|
| मासि | योनि (सामान्य) |
| नासिचा | बालिकाको योनि |
| पिसि | किशोरीको योनि |
| भकू | बुढीको योनि |

दुई नाम भएका शब्दहरूमा एउटा धार्मिक र अर्को सामान्य छन्, जस्तो -

| **अर्थ** | **धार्मिक** | **साधारण** | |
|---|---|---|---|
| दूबो | सितु | गुँसिघाँय् | |
| फुल | चर्बाँ: (चबां) | खँय् | |
| पैसा | दक्षिणा | धेबा | इ. |

यसरी वस्तुवादी सामान्य नामहरू धेरै भए पनि भाववाचक नाममा भने नेपालभाषा गरीब छ । **प्रेम** जनाउने **मतिना / य:त्य:**, **सम्झना** जनाउने **लुमन्ति**, **करूणा** जनाउने **कन्ना** केही भए पनि धेरै जसो भाववाचक नामहरू संस्कृतबाट तत्सम रूपमा लिई प्रयोग गरिन्छन् । यी शब्दहरु हुन् - दया, माया, घृणा, साहस, इमान, धर्म, शक्ति, भक्ति, श्रद्धा, पुण्य इ. ।

आफ्नै भाषाको शब्दको अभावमा व्याकरणिक कोटीका धेरैजसो नामहरू पनि संस्कृतबाटै लिइएका छन् । हुन त केही विवाद रहित व्याकरणिक कोटीका नामहरू नेपालभाषाकै पनि प्रयोग गरिन थालिएका छन्, जस्तो **एकवचन**को लागि **छबचं**, बहुवचनका लागि **त:बचं** चन्द्रबिन्दुको लागि **मिलाफुति**, **शिरबिन्दु**को लागि **सिन्ह:फुति**, **कोटिकार**को लागि **ताजिग्व:** **नाम**को लागि नां इत्यादि । तर यस्ता शब्दहरू सीमित छन् र सबैजसो संस्कृतकै व्याकरणिक कोटीका नामहरू नेपालभाषामा पनि प्रयोग गरिन्छन् ।

### ३.१.४ लिङ्ग

नेपालभाषामा व्याकरणिक लिङ्ग छैन, प्राकृतिक लिङ्ग मात्र छ । यस भाषाका सजीव नाममा भाले जनाउने **पुलिङ्गी** र पोथी जनाउने **स्त्रीलिङ्गी** र भालेपोथी नछुट्टिने **उभयलिङ्गी** हुन्छन् । जस्तै -

| पुलिङ्ग | स्त्रीलिङ्ग | उभयलिङ्ग | अर्थ |
|---|---|---|---|
| राम | सीता | मनू | मान्छे |
| बौ (पिता) | माँ: (आमा) | किसि | हात्ती |

व्याकरणिक लिङ्ग नभएको नेपालभाषामा निर्जीव वस्तुको लिङ्ग हुदैन ।

### ३.१.४.१ लिङ्ग परिवर्तन

**(क) नी प्रत्यय थपी**

पुलिङ्गी शब्दलाई मूल रूप मानी त्यस पछाडि **-नी** प्रत्यय लगाए स्त्रीलिङ्गी शब्दको व्युत्पादन हुन्छ । खास गरी ठाउँ विशेषका व्यक्ति, जाती र व्यवशाय बुझाउने पुलिङ्गी शब्दपछाडि **-नी** प्रत्यय लाग्छ, जस्तै-

**ठाउँ विशेषका व्यक्ति बुझाउने**

| अर्थ | पुलिङ्ग | प्रत्यय | व्यु.नाम | अर्थ |
|---|---|---|---|---|
| पाटने | यलय् | नी | यल्नी | पाटने आइमाई |
| भादगाँउले | ख्वपयनी | नी | ख्वप्नी | भादगाउँले आइमाई |
| शहरीया | यमि | नी | यमिनी | काठमाडौंकी आइमाई |
| भोटे | सँय् | मि (नी) | समी (नी) | भोटेनी |

ठाउँको नाउँबाट उठेको नेपालभाषाको पुलिङ्गी शब्द यिनै चार मात्र छन्, जसमा **नी** प्रत्यय जोडी लिङ्ग-परिवर्तन गरिन्छ । उपत्यका बाहिरका जिल्लाहरू र विदेशको नाउँमा **नी** लाग्दैन । उपत्यकामै पनि विभिन्न गाउँहरूमा नेवारी नाउँ पनि छन् तापनि त्यहाँ पनि **नी** प्रत्यय नलागी उभयलिङ्गी प्रत्यय **मि** लाग्छ र सम्बन्धित गाउँका व्यक्ति पुरुष वा स्त्री के हुन् भन्ने कुरा सन्दर्भ हेरी बुझ्नुपर्दछ तापनि **मि** प्रत्ययले धेरै जसो स्त्रीलिङ्गीलाई नै बुझाउँछ, जस्तै -

| अर्थ | ठाउँ | उभ. प्र. | व्यु.नाम | अर्थ |
|---|---|---|---|---|
| चापागाउँ | वा | मि | वामि | चापागाउँकी आइमाई |
| कीर्तिपुर | केपू | मि | केपूमि | कीर्तिपुरकी आइमाई |

**(आ) व्यवसाय तथा जात-जाती बुझाउने**

| पुलिङ्ग | प्रत्यय | व्यु. नाम | अर्थ | |
|---|---|---|---|---|
| ज्यापु | नी | ज्यापुनी | कृषक-महिला | |
| स्यस्य: | नी | स्यस्य:नी | श्रेष्ठ-महिला | |
| डाक्टर | नी | डाक्टरनी | महिला डाक्टर | इ. |

**(ख) उभयलिङ्गी शब्दअगाडि** बा / थु र मा **थपी**

सजीवमा मानिस बाहेक अरू जन्तु र जन्तुइतर कीरा आदि बुझाउने उभयलिङ्गी नाम अगाडि भाले बुझाउने **बा** वा **थु** र पोथी बझाउन **मा-** जोडेर पनि लिङ्ग परिवर्तन गरिन्छ । सामान्यतया भाले बुझाउन **बा-** प्रयोग गरिन्छ तापनि रांगो र साँढेमा **बा**-को ठाउँमा **थु-** प्रयोग गरिन्छ, जस्तै -

| उभयलिङ्ग | अर्थ | पुलिङ्ग | स्त्रीलिङ्ग |
|---|---|---|---|
| किसि | हात्ती | बा-किसि | मा-किसि |
| चखुं | भंगेरा | बा-चखुं | मा-चखुं |
| किमि | जुगा | बा-किमि | मा-किमि |
| मेय् | राँगो वा भैंसी | थु-मेय् | मा-मेय् |
| सा | साँढे वा गाई | थु-सा | मा-सा |

नेपालभाषा मात्र होइन, उभयलिङ्गी नामअगाडि भाले पोथी जनाउन शब्द थपी लिङ्ग छुट्याउनु वास्तवमा चीनिया-भोट परिवारको लक्षणै हो ।

**(ग) शब्द भिन्न (पुलिङ्गमा एकथोक र स्त्रीलिङ्गमा अर्थोक)**

पुलिङ्गमा एक थोक र स्त्रीलिङ्गमा अर्थोक हुने लक्षण पनि चीनिया-भोट परिवारको एक लक्षण हो (Konow; 1990:6) । नेपालभाषामा पनि पुलिङ्ग र स्त्रीलिङ्गमा बिलकुलै फरक हुने थुप्रै शब्दहरू छन्, जस्तै -

(अ) धेरै फरक

| पुलिङ्ग | अर्थ | स्त्रीलिङ्ग | अर्थ |
|---|---|---|---|
| भाजु | भद्र पुरुष | मयुजु | भद्र महिला |
| मिजं | पुरुष | मिस्‍ा | स्त्री |
| च्य: | नोकर | भ्वातिं | नोकर्नी |
| बाग: | पुड्के | भुतु | पुड्की |
| भा:त | लोग्ने | कला: | स्वास्नी |
| अबु | बाबु | माँ: (=मां) | आमा |
| बरे | शाक्य | मालिं (र्नी) | शाक्यर्नी |
| पाजु | मामा | मल्जु | माइजू |
| दाजु | दाइ | तता:जु | भाउजू |
| काय् | छोरा | म्ह्याय् | छोरी |
| दुगु | बोको | च्वलय् | बाख्री |
| ग्वंग: | कुखुरा | माखा | कुखुरी |
| जुजु | राजा | लानि | रानी इ. |

(आ) अलि फरक

पुलिङ्गमा एक थोक र स्त्रीलिङ्गमा अर्थोक भए पनि बिल्कुलै फरक किसिमको नभई अलि फरक भए पनि स्त्रीलिङ्गमा सर्वत्र इ-कारान्त भएको उदाहरण पनि नेपालभाषामा पाइन्छ, जस्तो -

| | | | |
|---|---|---|---|
| ज्याथ: | बुढो | ज्यिथि=जिथि | बुढी |
| अजा | बाजे | अजि | बज्यै |
| लाखय् | राक्षस | ल:सिं / लस्सिं | राक्षसनी |
| यार्पा | डेढे | यालिं (=यार्लीं) | डेढी |
| प्व: / पो | पोडे | प्वरिं (=पोरीं) | पोडेनी |
| नाय् | कसाई | नइँ | कसाइनी |
| वँय् | बहुला | उइँ | बहुलाही |
| खुँ | चोर | खुनि | चोर्नी |
| काँ (=कां) | अन्धो | कनि | अन्धी |
| थका: | ठग | थकिं (=थकीं) | ठग महिला |

| पुलिङ्ग | अर्थ | स्त्रीलिङ्ग | अर्थ |
|---|---|---|---|
| ख्वाँय् | बहिरो | खुसिं (=खुसीँ) | बहिरी |
| ग्वाज्य: | गोज्याङ्ग्रो | गबलिं(=गबलीँ) | गोज्याङ्ग्री |
| च्वापुका: | छुकछुके | च्वाकिं (च्वाकीँ) | छुकछुकी |
| नायो | नायक | नकिं (=नकीँ) | नायिका इ. |

## ३.२ सर्वनाम

नामको सट्टामा आई नामले जस्तै काम गर्ने शब्दलाई **सर्वनाम** भनिन्छ । नेपालभाषामा मुख्य सर्वनाम पुरुषवाचक र प्रश्नवाचक हुन् तापनि अरू सर्वनाममा दर्शकवाचक, सम्बन्धवाचक, निजवाचक र अनिश्चयवाचक पर्दछन् ।

### ३.२.१ पुरुषवाचक सर्वनाम

#### ३.२.१.१ आत्म र परको धारणा

पुरुष तीनै छन् तापनि उत्तम पुरुष (उ.पु) को **आत्म,** मध्यम पुरुष (म.पु.) र अन्य पुरुष (अ.पु.) को लागि **पर** शब्द कायम गरिएको छ । मध्यम पुरुष र अन्य पुरुषका क्रिया-रूप एउटै हुनाले सरलताको लागि तीन पुरुषलाई दुईमा सीमित गरिएको हो, जस्तै -

| पर-भूत | पर-अभूत |
|---|---|
| छं / वं जा नल | छं / वं जा नइ |
| तिमीले भात खायौ | तिमी भात खानेछौ |
| उसले भात खायो | उसले भात खानेछ |

#### ३.२.१.२ आत्म-पुरुषमा समावेशी र असमावेशी रूप

नेपालभाषामा आत्म-पुरुषको बहुवचन (ब.व.) रूपमा सुत्ने समेत समावेश हुने **हामी (हरू)**को अर्थमा / झी (पिं) / र सुत्ने समावेश नहुने **हामी (हरू)**को अर्थमा / जि-पिं / गरी दुई रूप छन् । समावेशीमा / झी / स्वयं नै बहुवचनको रूप भएकोले **-पिं** अनिवार्य छैन, असमावेशीमा / जि / **म** एकवचन हुनाले बहुवचन-प्रत्यय **पिं** अनिवार्य छ ।

### ३.२.१.३ अन्य-पुरुष तथा दर्शक सर्वनाम

पर-पुरुष अन्तर्गत आउने अन्य-पुरुष र दर्शक सर्वनाममा नामले भिन्न भए पनि उदाहरण भने उही आउँछन् । वक्ता पहिलो पुरुष - **उत्तम पुरुष**, सुन्ने (जसलाई सुनाइएको हो ) दोश्रो पुरुष - **मध्यम पुरुष**, ती देखि भिन्न तेस्रो पुरुष - **अन्य पुरुष** हो । कुनै व्यक्ति वा वस्तुलाई किटान गरी उनीहरूको सट्टामा जुन सर्वनाम प्रयोग गरिन्छ तिनीहरू **दर्शक** सर्वनाम हुन् । यसरी भिन्न परिभाषामा चिनाए पनि उदाहरण दिंदा उही पर्न आउँछन् - **व** (त्यो), **थ्व** (यो), **इपिं** (उनीहरू, तिनीहरू), **थुपिं** (यिनीहरू) इ. ।

अन्य-पुरुष तथा दर्शक सर्वनामका चार रूप छन् - **समीप-दूर**, **दूर-समीप**, **दूर र अतिदूर** -

| | |
|---|---|
| समीप-दूर | : बोल्नेको नजिक, सुन्नेदेखि टाढा - / थ्व / **यो** |
| दूर-समीप | : बोल्ने देखि टाढा, सुन्नेको नजिक / आमु / **त्यो** |
| | : तिमीसितको त्यो वा तिम्रो नजिकको त्यो |
| दूर | : बोल्ने र सुन्ने दुवैबाट टाढा / व / **त्यो** |
| अतिदूर | : बोल्ने र सुन्नेबाट धेरै टाढा / हुं / **त्यो टाढाको** |

अन्यपुरुष तथा दर्शक सर्वनामलाई उनीहरूको बहुवचन रूप समेत दिई चार्टमा यसरी देखाउन सकिन्छ -



### ३.२.१.४ सर्वनामका आदरार्थी रूप

**(क)** मध्यम पुरुषका आदरार्थी रूप तीन छन् - / **छि, छ:पिं, छलपोल** /

/ छ:पि र छलपोल / **तपाई**, देवता, राजा र राजपरिवारका सदस्यहरू, हिन्दूमा ब्राम्हण र बौद्धमार्गी (शाक्य र बज्राचार्य) हरूलाई लाग्छ भने अरू सामान्यलाई / छि / प्रयोग हुन्छ ।

**पिं** नेपालभाषामा बहुवचनको प्रत्यय हो तापनि उच्च सम्मानपूर्वक भन्दा / छ:पिं / **तपाईमा -पिं** एकवचन र बहुवचन दुवैमा लाग्छ, अन्यत्र भने **पिं** बहुवचनमा मात्र लाग्छ, जस्तै -

| **एकवचन** | **बहुवचन** | | **अर्थ** |
|---|---|---|---|
| छ | छिक् | - पिं | तपाईहरू |
| छ:पिं | छ: | - पिं | तपाईहरू |
| छलपोल | छलपोल | - पिं | हजुरहरू |

**(ख)** अन्य-पुरुषको आदरार्थी रूप समीपदर्शक र दूरदर्शकका लागि भिन्नाभिन्नै छन् ।

समीपदर्शकमा देवता, राजा र राजपरिवारका सदस्यहरू, बौद्धमार्गी ब्राम्हणको लागि **थ्वसपोल** र सामान्य अरूहरूलाई **थ्वयूक:** हुन्छ । बहुवचनमा यी दुवैमा **पिं** प्रत्यय जोड्नुपर्छ ।

दूरदर्शकको सामान्य दूरदर्शकमा देवता, राजा र राजपरिवार बौद्धमार्गी र ब्राम्हणको लागि **वसपोल** र अरू सामान्यमा **वयूक:** र तिनीहरूलाई बहुवचन रूप दिन **पिं** जोडी **वसपोलपिं, वयूक:पिं** गर्नु पर्छ । दूर-समीप / आमु / **तपाईसंगको त्यो** र अतिदूरदर्शक / हुं / **परको त्यो** र तिनीहरूको बहुवचन रूप क्रमश: **आमु-पिं** र **हुं-पिं** हुन्छन् । तिनीहरूको आदरार्थी रूप छैन ।

### ३.२.२ प्रश्नवाचक सर्वनाम

प्रश्नवाचक सर्वनाममा मानिसको लागि / सु ? / **को ?**, मानिस बाहेक अरू प्राणीहरू र निर्जीव बस्तुहरूको लागि / छु ? / **के ?** प्रयोग हुन्छ । ठाउँ र समय सोध्नु पर्‍यो भने क्रमश: / गन ? / **कहाँ ?** र / गुब्लय् ? /**कहिले ?** प्रयोग गरिन्छन् । त्यस्तै केहीं बेवास्ता भइराखेकोमा सम्झना

मिलाउन र कहाँ छ भनी ठाउँ सोध्नु पऱ्यो भने पनि / ग्व ? / **ख्वोइ ?**, **कहाँ छ ?** प्रयोग हुन्छ । तिनीहरूको **वितरक** बहुवचन रूपमा मूल रूपलाई नै द्वित्व गरेको हुन्छ, जस्तै -

| | ए.व. | अर्थ | ब.व. | अर्थ |
|---|---|---|---|---|
| मानिसकोलागि | सु ? | को ? | सु सु ? | को को ? |
| मानिस बाहेकमा | छु ? | के ? | छु छु ? | के के ? |
| ठाउँ सोध्दा | गन ? | कहाँ ? | गन गन ? | कहाँ कहाँ ? |
| समय सोध्दा | गुब्लय् ? | कहिले ? | गुब्लय् गुब्लय्? | कहिले कहिले? |

## ३.२.३ अरू सर्वनामहरू

### ३.२.३.१ दर्शक सर्वनाम

पुरुषवाचक सर्वनामको ३.२.१.३ अन्यपुरुष तथा दर्शक सर्वनाममा वर्णन भैसकेको छ ।

### ३.२.३.२ सम्बन्धवाचक सर्वनाम

प्रश्नवाचक सर्वनाम र सम्बन्धवाचक सर्वनामको एउटै रूप छ । तर प्रयोगमा भने सम्बन्धवाचकले प्रश्न सोध्ने काम नगरी आश्रित संयोजक भई एउटा उप-वाक्यसित अर्को उप-वाक्य जोडी मिश्रित-वाक्य बनाउँछ । नेपालीमा भने प्रश्नवाचकमा **के, को, कहाँ** आदि हुन्छन् भने सम्बन्धवाचकमा विकल्पले **जे, जो, जहाँ** पनि हुनसक्छन्, जस्तै -

| **प्रश्नवाचक** | **सम्बन्धवाचक** |
|---|---|
| वं **छु** धाल | वं **छु** धाल जिं मसिउ |
| (त्यसले **के** भन्यो) | (त्यसले **के** भन्यो मलाई थाहा छैन) |
| **सुयाके** कया ? | **सुयाके** कया वयात हे लित बिउ |
| (**कोसित** लियौं ?) | (**कोसित/जोसित** लियौं उसैलाई फिर्ता देउ) |
| सफू **गन** दु ? | वं जिके सफू **गन** **दु** धका: न्यन |
| (पुस्तक **कहाँ** छ ?) | (उसले मलाई पुस्तक **कहाँ** छ भनेर सोध्यो) |
| गुरुं **छु** **छु** धाल ? | गुरुं **छु छु** धाल फुक्क लुमंकि |
| (गुरुले **के के** भने ?) | गुरुले **के के** / **जे जे** भने, सबै सम्झ । इ. |

### ३.२.३.३ निजवाचक सर्वनाम

/ थः / **आफू** नेपालभाषाको निजवाचक सर्वनाम हो । यो पुरूषवाचक सर्वनाममा जोड दिने हिसावले प्रयोग हुन्छ, जस्तै -

| | |
|---|---|
| वया **थः**हे पाजु | (उसको **आफ्नै** मामा) (अ. पु) |
| जि **थः**हे म्ह्याय् | (मेरी **आफ्नै** छोरी) (उ. पु.) |
| छं **थः**हे किजा | (तिम्रो **आफ्नै** भाइ) (म. पु.) |

**थः**पछाडि **-पिं** जोडी यसको सामान्य बहुवचन रूप दिइन्छ भने यिनै मूल रूप **थः**लाई द्वित्व गरेर वितरक बहुवचन (एक एक गरी धेरै जनाउने) रूप दिन सकिन्छ, जस्तै -

/ थः - पिं / **आफूहरू**
/ थः - थः / **आफू आफू**

### ३.२.३.४ अनिश्चयवाचक सर्वनाम

प्रश्नवाचक सर्वनामको अन्तिम स्वरमा अनुस्वार दिई दीर्घ रूप दिए अनिश्चयवाचक सर्वनाम हुन्छ, जस्तै -

| प्रश्नवाचक सर्वनाम | अनिश्चयवाचक सर्वनाम | |
|---|---|---|
| सु **को** | सुं **कोही** | |
| छु **के** | छुं **केही** | |
| गन **कहाँ** | गनं **कहिं, कतै** | इ. |

यसको वितरक बहुवचन रूप दिन मूल रूपलाई नै द्वित्व गरिन्छ, जस्तै -

/ छुं - छुं / **केही केही**, / सुं - सुं / **कोही कोही** इ.

### ३.२.३.५ विस्मृत नामको सर्वनाम

/ अथिं / **केरे**

कहिलेकाहिं विर्सिएको नाम विशेष सम्झने कोसिस गर्दा सम्झन नसक्दा **अथिं** शब्द प्रयोग गरिन्छ । त्यस्तो अवस्थामा नेपालीमा **केरे** भन्ने गरिन्छ ।

## ३.३ विशेषण

नामको गुण जाहेर गर्ने विशेषण हुन्छ । जुन नामको गुण जाहेर गर्ने हो सामान्यतया विशेषण त्यसअगि आउँछ ।

### ३.३.१ सामान्य विशेषण

कुनै प्रत्यय नजोडिएको आफैमा पूर्ण तथा मूल रूपको विशेषण सामान्य विशेषण हुन्छ । सामान्य विशेषण गुणवोधक, परिमाणबोधक, सार्वनामिक र क्रियार्थपूरक गरी चार किसिमका छन् ।

#### ३.३.१.१ गुणबोधक विशेषण

नामको रूप, रंग, स्वाद, गुण आदि बुझाउने गुणबोधक विशेषण हुन्छ । यस विशेषणले गुण जाहेर गर्दा सम्बन्धित नामअगाडि, विशेषणपछाडि (विशेषण र संज्ञाको बीचमा) नाम सजीव भए म्ह र निर्जीव भए गु संयोजक विशेषणसित जोडिएर आउँछ, जस्तै -

| विशेषण | संयोजक | नाम | |
|---|---|---|---|
| हाकू | -गु | लाकां | |
| (कालो | × | जुत्ता) | |
| पाउँ | -गु | घाँय् | |
| (अमिलो | × | घाँस) | |
| त:धी | -म्ह | मनू | |
| (अग्लो | × | मान्छे) | |
| चाक्ला: | -गु | सुकू | |
| (बाटुलो | × | सुकुल) | |
| हारां | -म्ह | मचा | |
| (मापाको | × | केटो) | इ. |

#### ३.३.१.२ परिमाणबोधक

यतिउति भनी संख्या होइन, गन्न नसकिने हिसाबले परिमाण देखाउने परिमाणबोधक विशेषण हुन्छ, जस्तै -

| | | | | |
|---|---|---|---|---|
| **यक्व** | मनू (त) । | **भचा** | ज्या । | |
| (**धेरै** | मानिस (हरू)) । | (**अलिकति** | काम ।) | इ. |

नेपाली र नेपालभाषामा पनि परिमाण र संख्याले नै बहुवचन बुझाउने ठाउँमा बहुवचन प्रत्यय राख्नु अनिवार्य छैन । त्यसैले / यक्व मनू / **धेरै मानिस** मा / - त / **हरू** राखे पनि हुन्छ, नराखे पनि हुन्छ ।

## ३.३.१.३ सार्वनामिक विशेषण

मूल रूपमा सर्वनाम भए पनि जुन नामको ठाउँमा सर्वनाम आएको हो सो नाम पनि सर्वनामपछाडि आएको छ र विशेषणले जस्तै उक्त सर्वनामले सो नामलाई निर्देशन गर्दछ भने त्यस सर्वनामलाई सार्वनामिक विशेषण भनिन्छ, जस्तै -

| | **सर्वनाम** | **सार्वनामिक विशेषण** |
|---|---|---|
| दर्शकवाचक - | **व** वल ।<br>(ऊ आयो) | **व मनू** वल ।<br>(त्यो मानीस आयो) |
| प्रश्नवाचक - | **सु** वल ?<br>(को आयो?) | **सु मनू** वल ?<br>(को मान्छे आयो?) |
| सम्बन्धवाचक - | **सुनां** नइ वं हे पुली ।<br>(जसले खान्छ उसैले तिर्छ) | **सु मनुखं** नइ **व** हे **मनुखं** पुली ।<br>(जुन मान्छेले खान्छ त्यही मान्छेले तिर्छ) |
| अनिश्चयवाचक - | **सुं** वल<br>(कोहीं आयो) | **सुं मनू** वल ।<br>(कोही मान्छे आयो) |

## ३.३.१.४ क्रियार्थपूरक विशेषण

प्रयोग हुने ठाउँको दृष्टिले विशेषण दुई किसिमका छन् - नाम विशेषण र क्रियार्थपूरक विशेषण । माथि उल्लेख गरिएका विशेषणहरू **नाम विशेषण** हुन् । यहाँ सम्बन्धित नामअगाडि रही विशेषणले नामको गुण जाहेर गरेको छ ।

**क्रियार्थपूरक विशेषण** नाम विशेषण विपरीत सम्बन्धित नामको पछाडि आई क्रियाको अर्थ पूरा गराउँछ, जस्तै -

| नाम विशेषण | | | क्रियार्थपूरक विशेषण | | | |
|---|---|---|---|---|---|---|
| वि. | सं | ना. | ना. | वि. | क्रिया | गु. क्रि. |
| ह्याउँ- | गु | स्वां | स्वां | ह्याउँ | जुल | > ह्याउँल |
| (रातो | × | फूल) | (फूल | रातो | भयो) | |
| त:धी- | म्ह | मनू | मनू | त:धी | जुल | |
| (अग्लो | × | मान्छे) | (मान्छे | अग्लो | भयो) | |

## ५.३.२ व्युत्पादित विशेषण

धातु, नाम र अर्को विशेषणमा प्रत्यय जोडी विशेषणको व्युत्पादन गर्न सकिन्छ ।

### ५.३.२.१ धातुबाट विशेषण

/ आ /

| क्रियार्थ | धातु | प्रत्यय | व्यु. वि. | प्रयोग | अर्थ |
|---|---|---|---|---|---|
| पकाउनु | खुन- | आ | खुना | खुना - ला | पकाएको मासु |
| निम्त्याउनु | ब्वन्- | आ | ब्वना | ब्वना - पौ | निमन्त्रणा-पत्र |
| ओइनु | ह्रन्- | आ | ह्रना | ह्रना - गा | गाँसिएको पछ्यौरा |
| अपनाउनु | नाल्- | आ | नाला | नाला- मचा | धर्मपुत्र/पुत्री इ. |

/ - ना /

| | | | | | |
|---|---|---|---|---|---|
| कुट्नु | चु- | ना | चुना | चुना - जाकि | फलेको चामल |

तिब्बवर्मी (Tibeto-Burman) परिवारका भाषाहरूको एउटा लक्षण के छ भने उही एक शब्दको एउटै रूप नाम, विशेषण र कतै-कतै क्रियामा पनि प्रयोग हुन सक्छ । **आ, ना** प्रत्यय जोडेको एउटै रूप नाम पनि हुन सक्छ, विशेषण र कतै कतै क्रिया पनि । वाक्यमा कुन ठाउँमा कसरी प्रयोग भएको छ त्यसबाट यो नाम हो, यो विशेषण वा क्रिया हो भन्ने थाहा पाउन सकिन्छ, जस्तै -

| धातु | प्र. | व्यु. शब्द | प्रयोग | अर्थ | पद |
|---|---|---|---|---|---|
| खुन् - | आ | खुना | न्या**खुना** | माछाको थलथले | ना. |
| | | | **खुना** ला | पकाएको मासु | वि. |
| | | | जिं ला **खुना** | मैले मासु पकाएँ | क्रि. |

| **धातु** | **प्र.** | **व्यु. शब्द** | **प्रयोग** | **अर्थ** | **पद** |
|---|---|---|---|---|---|
| चुन् - | आ | चुना | **चुना** | फल्ने काम | ना. |
| | | | **चुना** जाकि | फलेको चामल | वि. |
| | | | जिं जाकि **चुना** | मैले चामल फलें | क्रि. |

**नेपाल** मूल रूपमा नाम हो तापनि **नेपालभाषा, नेपालसंस्कृति**मा भाषाको गुणबोधक रूप **नेपाल** विशेषण हो । भोट-चिनिया परिवारका भाषाहरूको सर्वेक्षण गर्नुहुने **स्टेन कोनो**ले (१९०९:३:१:४) लेख्नुभएको थियो - *धेरैजसो मूल रूपहरू एक भन्दा बढीमा प्रयोग गर्न सकिन्छ, जस्तो कि नाम, विशेषण वा क्रिया* (.... most bases can be used in more than one way as nouns as adjectives or as verbs) । उही पुस्तकको पृष्ठ ७ मा वहाँले यस्तो पनि लेख्नुभएको थियो- *विशेषणहरू साधारणतया नाम रूपबाट छुटिन्न* (Adjectives are commonly undistinguishable from nouns in form) ।

| **क्रियार्थ** | **धातु** | **प्र.** | **व्यु. वि.** | **अर्थ** | |
|---|---|---|---|---|---|
| **/ याः /** | | | | | |
| छुल्याउनु | छुल्- | याः | छुल्याः | छुल्याहा | |
| हुल्नु | हुल्- | याः | हुल्याः | हुल्याहा | |
| पोल्नु | पोल्- | याः | पोल्याः | पोल्याहा | इ. |

छुल्याः, हुल्याः आदि विशेषणका रूपमा मात्र होइन, नाम रूपमा पनि प्रयोग गरिन्छन्, जस्तै -

| **वि.** | **सं.** | **नाम** | **क्रिया** |
|---|---|---|---|
| छुल्याः | म्ह | मनू | वल । |
| (छुल्याहा | | मान्छे | आयो ।) |
| | | छुल्याः | वल । |
| | | (छुल्या | आयो ।) |
| हुल्या | म्ह | मनू | वल । |
| (हुल्याहा | | मान्छे | आयो ।) |
| | | हुल्याः | वल । |
| | | (हुल्याहा | आयो ।) |

| क्रियार्थ | धातु | प्र. | व्यु. वि. | प्रयोग | अर्थ |
|---|---|---|---|---|---|
| / : / | | | | | |
| खोल्नु | कन् - | : | कँ: | कँ:मिखा | खुलेको आँखा |
| सुक्नु | गन् - | : | गँ: | गँ:ल्वय् | क्षयरोग |
| सस्तोहुनु | दन् - | : | दँ: | दँ:बन्जा: | सस्तो व्यापारी |
| उदाउनु | लु - | : | लू (= लु:) | लूनिभा: | उदाउँदो घाम |
| थाक्नु | न्यल् - | : | न्य: | न्य:ख्वा: | थकित चेहरा |
| थर्किनु | थ्व - | : | थ्व: | थ्व:स: | थर्किने स्वर |
| तर्सिनु | ग्या - | : | ग्या: | ग्या:ख्वा: | तर्सिएको चेहरा |

(विसर्ग भनेको विस्तारित स्वर (vowel-length) को प्रतीक हो । व्युत्पादक प्रत्यय स्वरूप आउँदा यसले क्रियाको मूल रूप धातुमा निम्नानुसार परिवर्तन ल्याएको छ -

धातुको अन्तिम -न् नासिकीकरण (चन्द्रबिन्दु) मा बदली सो अगिल्लो स्वर-वर्णमाथि चढ्न गएको छ भने, धातुको अन्तिम -ल लोप भएको छ ।)

विशेषणको यो रूप क्रियात्मक विशेषण (attributive adjective) रूपमा संज्ञापछाडि आउँदा क्रिया-रूपायनमा स्वभाव / स्थितिबोधक रूपको हुनजान्छ, जस्तै -

| क्रियार्थ | धातु | प्र. | वि. | सं | सं | क्रिया |
|---|---|---|---|---|---|---|
| मिठो हुनु | सा - | | सा: | जा | जा | सा: |
| | | | (मीठो | भात) | (भात | मीठो (छ)) |
| सुक्नु | गन् | : | गँ: | ल्वय् | वस: | गँ: |
| | | | (सुक्ने | रोग) | (लुगा सुकेको(छ)) | इ. |

क, क्व, छि प्रत्यय लागेका व्युत्पादक विशेषणले परिमाण बुझाउँछ -

| क्रियार्थ | धातु | प्र. | वि. | अर्थ |
|---|---|---|---|---|
| / क / | | | | |
| सकिनु | फु - | क | फुक् - क | सब्बै |
| ढाकिनु | ब्या - | क | ब्याक् - क | जम्मै |

(प्रत्यय -क लिनुअगि उच्चारणमा जोड् दिने हिसाबले नेपालभाषामा उही

क् द्वित्व भएर अगिल्लो अक्षरमा आए जस्तै नेपालीमा पनि सबै को सब्बै (ब द्वित्व) भएको छ ।)

| **क्रियार्थ** | **धातु** | **प्र.** | **वि.** | | **अर्थ** |
|---|---|---|---|---|---|
| **/ क /** | | | | | |
| भन्नु | घा - | क्क | धाक् - | क्क | भनेजति |
| ल्याउनु | ह - | क्क | हक् - | क्क | ल्याएजति |
| बच्नु | ल्यन् - | क्क | ल्यँक् - | क्क | बचेजति इ. |
| **/ छि /** | | | | | |
| पुग्नु | गा - | छि | गा - | छि | पुग्नेजति मात्र |
| चाहिनु | मा - | छि | मा - | छि | चाहिएजति मात्र |
| पर्नु | तु - | छि | तु - | छि | परेजति मात्र |

यसरी क, क्क प्रत्यय लागी बनेका व्युत्पादित विशेषणले अधिकतम परिमाण र छि प्रत्यय लागी बनेका व्युत्पादित विशेषणले न्यूनतम परिमाण बुझाएका छन् ।

| | | | | | |
|---|---|---|---|---|---|
| **/ सि /** | | | | | |
| सुक्नु | गन् - | सि | गँ: - | सि (गंसि) | दुब्लो |
| **/ का /** | | | | | |
| भित्रिनु | थ्या - | का | थ्या - | का | स्वीकृत |
| **/ ख्ना /** | | | | | |
| रुनु- | ख्व - | ख्ना | ख्व - | ख्ना | रुञ्चे |

## ३.३.२.२ नामबाट विशेषण

| **अर्थ** | **नाम** | **प्र.** | **वि.** | **अर्थ** |
|---|---|---|---|---|
| **/ लु /** | | | | |
| आँसु | ख्वबि | लु | ख्वबिलु | रुञ्चे |

| अर्थ | नाम | प्र. | वि. | अर्थ |
|---|---|---|---|---|
| **कुलु / गुलु** | | | | |
| रक्सी | अयला: | कुलु/गुलु | अयला:कुलु/गुलु | रक्स्याहा |
| जाँड | थ्वँ | कुलु/गुलु | थ्वँकुलु/गुलु | जँड्याहा |
| रिस | तँ: (=तं) | कुलु/गुलु | तँ:कुलु/गुलु | रिसाहा |
| गाँजा | गजि | कुलु/गुलु | गजिकुलु/गुलु | गँजडी |

(काठमाडौंमा **गुलु** र पाटनमा **कुलु** भन्ने चलन छ ।)

| | | | | |
|---|---|---|---|---|
| **/ मुलु /** | | | | |
| गुँ | खि | मुलु | खिमुलु | हगुवा |
| मूत | च्वक | मुलु | च्वकमुलु | मुतुवा |
| **/ सुलु /** | | | | |
| सिंगान | न्हि | सुलु | न्हिसुलु | सिँगाने |

(**सुलु**लाई भक्तपुरमा **सुतु** भनिन्छ)

| | | | | |
|---|---|---|---|---|
| **/ कुह्वा: /** | | | | |
| मन | मति | कुह्वा: | मतिकुह्वा: | सानोचित्तको |
| **/ सुवा /** | | | | |
| कुरा | खँ | सुवा | खँसुवा | कुरौटे |
| **/ सीं /** | | | | |
| नाठो | लेव: | सीं (=सिं) | लेव:सीं | रण्डी |
| **/ पायो /** | | | | |
| मुख | ख्वा: | पायो | ख्वा:पायो | मुखहेरी व्यवहार गर्ने |

### ३.३.२.३ विशेषणबाट अर्को विशेषण

| अर्थ | वि. | प्र. | अर्को वि. | अर्थ |
|---|---|---|---|---|
| / कालि / | | | | |
| माथिल्लो | थ - | कालि | थकालि | जेठो |
| तल्लो | क्क - | कालि | क्ककालि | कान्छो |
| / स्काय् / | | | | |
| असल | भिं - | स्काय् | भिंस्काय् | चेपारे |

### ३.३.३ विशेषणमा गुणको तुलनात्मक भेद

संज्ञाको गुण जाहेर गर्दा सो गुण कति मात्रामा छ भन्ने बारे **सामान्य, सामान्यभन्दा बढी** र **सबभन्दा बढी** गरी तीन भागमा विभाजन गरिएकोलाई अंग्रेजीमा डिग्री भन्ने degree चलन छ। समान्यलाई positive, सोभन्दा बढी बा घटी जनाउने Comparative भनी सोको मात्रा बुझाउने विशेषणमा अंग्रेजीमा **-er**, संस्कृतमा **-तर** र सबभन्दा बढी बा घटी जनाउनेलाई superlative भनी सोको मात्रा बुझाउन अंग्रेजीमा **-est** संस्कृतमा **-तम** विशेषणको सामान्य रूपमा थपिन्छन्। नेपालभाषामा त्यस्ता प्रत्ययहरू नभएकाले सम्बन्धित विशेषण अगाडि क्रमश: / झन् / **बढ्ता,** / दक्लय् / दक्सिबय् / **सबभन्दा** भन्ने शब्द थपिन्छन्, जस्तै -

| मात्रा | सामान्य | सामान्यभन्दा बढी | सबभन्दा बढी |
|---|---|---|---|
| **English** | Positive | Comparative | Superlative |
| **नेपालभाषा** | ताहा | झन् ताहा | दक्लय् /दक्सिबय् ताहा |
| **संस्कृत** | दीर्घ | दीर्घत्तर | दीर्घतम् |
| **नेपाली** | लामो | झन् लामो | सबभन्दा लामो |

## ३.४ संख्यावाचक शब्द (ल्या:ग्व:)

संख्यावाचक शब्दको लागि नेपालभाषामा **ल्या:ग्व:** भन्ने आफ्नै शब्द छ। सरल र संयुक्त गरी दुई किसिमका संख्यावाचक शब्दहरू छन्।

### ३.४.१ सरल संख्यावाचक शब्द

नेपालभाषामा मूलरूपमा अंकहरू **छ** (१) देखि **झि** (१०)सम्मका, **सः** (१००), र **द्वः** (१०००) हुन् । यिनीहरू सरल संख्यावाचक शब्द हुन् । शाब्दिक अर्थको दृष्टिले यिनीहरू जोडिएर वा गुणन गरिएर आएका नभई आफैमा पूर्ण छन् ।

#### ३.४.१.१ सरल संख्यावाचक शब्दका संरूपहरू

| संख्या | मूल | संरूप | संख्या | मूल | संरूप |
|---|---|---|---|---|---|
| १ | छ | छ, छि | ७ | न्हय् | -- |
| २ | नि | --- | ८ | च्या | च्या, चय् |
| ३ | स्व | स्व, स्वङ्, सु | ९ | गु | गुङ्, गु |
| ४ | पि | प्य, प्यङ्, पि | १० | झि | इ, यु, झि |
| ५ | न्या | न्या, न्यय् | १०० | सः | स, सः |
| ६ | खु | --- | १००० | द्वः | -- |

मूल रूप **एक** (१)का दुई संरूप छन् - **छ** र **छि** । -**छ** कोटिकारको अगाडि आउँछ, जस्तै -

**/ छ /**

| संरूप | कोटि | नाम | |
|---|---|---|---|
| छ | पा | मरि | |
| (एक | वटा | रोटी) | |
| छ | कू | ग्वय् | |
| (एक | टुक्रा | सुपारी) | |
| छ | पु | च्वसा | |
| (एक | वटा | कलम) | इ. |

**/ छि /**

कुनै निश्चित समयावधि वा परिमाणको पछाडि रही **छि**-ले तिनीहरूको एकाइ बुझाउँछ, जस्तै -

**(क) समयावधिको एकाइ**

दँ - छि > दँछि वर्ष दिनको एकाइ
ला - छि > लछि महीनादिनको एकाइ
चा - छि > चछि रातभरको एकाइ इ.

**(ख) नापतौलको एकाइ**

फँ - छि > फछि आठमानाको एकाइ
कू - छि > कूछि दुईमानाको एकाइ
क्ला - छि > क्लाछि बित्ताभरको एकाइ
म्हु - छि > म्हुछि मुठ्ठीभरको एकाइ
म्ह - छि > म्हछि शरीरभरको एकाइ इ.

**(ग) गन्तीको एकाइ**

द्व: - छि > द्व:छि एक हजारको एकाइ
सत् - छि > सच्छि एक सयको एकाइ

**(घ) पूर्णताको एकाइ**

न्हि - छि > न्हिछि दिनभरको एकाइ
च - छि > चछि रातभरको एकाइ
भ्व - छि > भ्वछि सिंगो परिवारको एकाइ
माचा - छि > माचाछि जोईपोइ र तिनका सन्तानको एकाइ इ.

**(ङ) आंशिक एकाइ**

ब - छि > बछि आधाको एकाइ
ज: - छि > ज:छि पच्चीस पैसाको एकाइ
दान् - छि > दान्छि एकदामको इकाइ
चकन् - छि > चकन्छि चौथाईको एकाइ इ.

**तीन (३)** जनाउने नेपालभाषामा तीनवटै संरूप छन् -**सु, स्वङ् र स्व**

**/ सु /**

१० ले गुणन गरी आउने संयुक्त संख्यावाचकअगाडि सु हुन्छ, जस्तै -

| | | | |
|---|---|---|---|
| सु | - इ - | ग: | अँ: |
| (३ × | १० | वटा | आँप) |

**/ स्वङ् /**

ग:, गू कोटिकारअगाडि **स्वङ्** आउँछ, जस्तै -

| | | | | | | |
|---|---|---|---|---|---|---|
| स्वङ् | - ग: | ध्यबा, | स्वङ् | - गू | ज्या | |
| (तीन | - वटा | पैसा) | (तीन | - वटा | काम) | इ. |

**/ स्व /**

ग:, गू बाहेक अरू **सबै कोटिकार**अगाडि **स्व** आउँछ, जस्तै -

| | | | | | | |
|---|---|---|---|---|---|---|
| स्व | - पा | मरि, | स्व | - म्ह | किसि | |
| (तीन | - वटा | रोटी) | (तीन | - वटा | हात्ती) | इ. |

**संख्यावाचक शब्द चार (४) का तीन संरूप छन् -**

**पि, प्य, प्यङ्**

**/ पि /**

१० ले गुणन गरी आउने संयुक्त संख्यावाचक शब्दअगाडि **पि** हुन्छ, जस्तै -

| | | | |
|---|---|---|---|
| पि | - इ | ग: | सुन्तला |
| (४ × | १० | वटा | सुन्तला) |

**/ प्यङ् /**

कोटिकार **ग:, गू**-अगाडि **प्यङ्** आउँछ, जस्तै -

| | | | | | | |
|---|---|---|---|---|---|---|
| प्यङ् | - ग: | भोग्त्या | प्यङ् | - गू | कक्षा | |
| (चार | वटा | भोगटे) | (चार | -- | कक्षा) | इ. |

**/ प्य /**

ग:, गू बाहेक अरू सबै **कोटिकार**अगि **प्य** लाग्छ, जस्तै -

| | | | | | | |
|---|---|---|---|---|---|---|
| प्य | - जु | लाकां, | प्य | - म्ना | जाकि | |
| (चार | जोर | जुत्ता) | (चार | माना | चामल) | इ. |

**पाँच** (५) जनाउने शब्दका दुई संरूप छन् - **न्या** र **न्य** जस्तै -

